ललितपुर, इलांननीस्थित

# श्रीचण्डमहारोषण (श्रीसङ्कटा) : एक अध्ययन



डा. रञ्जना वज्राचार्य

# ललितपुर, इलांननीस्थित श्रीचण्डमहारोषण (श्रीसङ्कुटा) : एक अध्ययन



ने.सं. ११२२ गुँला धर्मारम्भको दिनमा श्रीचण्डमहारोषणप्रति अर्पित विभिन्न रत्नादिले सुशोभित चन्द्रकलायुक्त नौवटा केटकी स्वाँ सहितको नवीन मुकुट, कुण्डल तथा रत्नमाला ।

अर्पणकर्ता :
**श्रीपद्मरत्न धाख्वा**
ललितपुर नागबहाल

श्रीचण्डमहारोषणको प्रतिमामा नवीन मुकुट, कुण्डल तथा रत्नमाला
अर्पण गरेको उपलक्ष्यमा प्रकाशित

# ललितपुर, इलांननीस्थित श्रीचण्डमहारोषण (श्रीसङ्कुटा) : एक अध्ययन



प्रकाशक
श्रीपद्मरत्न धाख्वा

अन्वेषक
डा. रञ्जना बज्राचार्य

प्रकाशक:

**श्री पद्मरत्न धाख्वा**

नागबहाल, ललितपुर, नेपाल

प्रथम संस्करण: ३०० प्रति

प्रथम प्रकाशन साल : ने.सं. ११२२, गुँला धर्मारम्भ
बु.सं. २५४६
बि.सं. २०५९, श्रावण २४
ई.सं. २००२

आवरण : गुह्यतले दिगी देवालयमा विराजित
श्रीचण्डमहारोषण (श्रीसङ्कटा)

श्री

॥ श्री चण्डमहारोषणाय नमः ॥

॥ ॐ आ हूँ चण्डमहारोषणाय् हूँ फट् स्वाहाः ॥

नीलवर्ण महावीर खड्गपाश तर्जनी ।
सर्वदुष्ट हरंताच अचलवीरं नमाम्यहं ॥

# समर्पण

श्रीचण्डमहारोषणको प्रतिमा स्थापनार्थ
सहयोग गर्नु हुने सम्पूर्ण महानुभाव तथा
परम पूजनीय प्रातः हजूरबुबा
श्री आशाकाजी धाख्वा प्रति
सादर समर्पित
गर्दछु ।

- रञ्जना वज्राचार्य

# चित्रफलक-सूची


| क्र.सं. | | | पृष्ठ संख्या |
|---|---|---|---|
| चित्र नं. १ | : | चारजना सिद्धहरुको प्रस्तर प्रतिमा | ९ |
| चित्र नं. २ | : | हिरण्यवर्ण महाविहार - क्वाबाहा: | १४ |
| चित्र नं. ३ | : | द्वारिका विहार - बैद्यबाहा: | १८ |
| चित्र नं. ४ | : | चैत्यवर्ण विहार - मिच्छुबाहा: | १९ |
| चित्र नं. ५ | : | श्वेतवर्ण गणेश सहित मन्दिर | १९ |
| चित्र नं. ६ | : | महाकालको प्रस्तर प्रतिमा | २० |
| चित्र नं. ७ | : | गणेशको प्रस्तर प्रतिमा | २१ |
| चित्र नं. ८ | : | गरुडको प्रस्तर प्रतिमा | २२ |
| चित्र नं. ९ | : | राजा योगनरेन्द्र मल्लकालीन ने.सं. ८७९ अंकित शिलापत्र | २४ |
| चित्र नं. १० | : | श्री ५ त्रिभुवनकालीन ने.सं. १०७० अंकित शिलापत्र | २६ |
| चित्र नं. ११ | : | श्रीवज्र, मञ्जुश्री र आर्यताराका प्रस्तर प्रतिमा | ५३ |

# विषय-सूची


| विषय-वस्तु | | पृष्ठ संख्या |
|---|---|---|
| | मन्तब्य | क |
| | प्राक्कथन | ख |
| | प्रकाशकीय | ग |
| *खण्ड एक* : | श्रीचण्डमहारोषण वा श्रीसङ्कटाको परिचय | |
| | क) पृष्ठभूमि | १ |
| | ख) प्राचीनता | ३ |
| *खण्ड दुई* : | ललितपुर, इलांननीस्थित श्रीचण्डमहारोषण वा श्रीसङ्कटा | |
| | क) परिचय | ५ |
| | ख) नामाङ्कन | ५ |
| | ग) श्रीचण्डमहारोषणको स्वरुप | ६ |
| | घ) श्रीचण्डमहारोषणको पूजा गर्ने विशेष तिथि, ब्रत र सङ्कटा दशा | ८ |
| | ङ) श्रीचण्डमहारोषणको साधन र ध्यान | १२ |
| *खण्डःतीन* : | गुह्यतले दिगी देवालय | |
| | क) इलांननीसित हिरण्यवर्ण महाविहारको सम्बन्ध | १४ |
| | ख) हिरण्यवर्ण महाविहारका दश र बीस स्थविर आजुहरुको नामावली | १६ |
| | ग) इलांननीको स्वरुप | १८ |
| | घ) गुह्यतले दिगी देवालयको स्वरुप | २० |
| | ङ) गुह्यतले दिगी देवालयको अभिलेख | २३ |

च) श्रीचण्डमहारोषणको प्रतिमा निर्माण
सम्बन्धी स्थानीय निवासीहरुको भनाई २९
छ) गुह्यतले दिगी देवालयको आर्थिक व्यवस्था र
रीतिथिति ३०
ज) गुह्यतले दिगी देवालयका गुठी (पूजा) ३२
झ) श्रद्धेय दशपारमिता आजु र बीस स्थविर
आजुहरुद्वारा विभिन्न पूजा सम्पन्न गर्न
हिरण्यवर्ण महाविहार सुधार समितिबाट
दिइने आर्थिक व्यवस्थाको विवरण ३३
*खण्डः चार* : निष्कर्ष ३५
परिशिष्ट नं. १ ३८
परिशिष्ट नं. २ ३९
परिशिष्ट नं. ३ ४०
परिशिष्ट नं. ४ ४१
परिशिष्ट नं. ५ ४२
परिशिष्ट नं. ६ ४५
परिशिष्ट नं. ७ ४६
परिशिष्ट नं. ८ ४७
परिशिष्ट नं. ९ ४८
परिशिष्ट नं. १० ५१
**सन्दर्भ ग्रन्थ - सूची** : नेवारी, नेपाली र English ५२

# मन्तव्य

ऐतिहासिक ललितपुर नगर अन्तर्गत पर्ने इलांननी एक प्राचीन वस्ती हो जहाँ बौद्ध तथा हिन्दू धर्मालम्वी दुबैका आराध्यदेवता श्रीचण्डमहाशेषण वा श्रीसंङ्कटाको प्रतिमा स्थापित गुह्यतले दिगी देवालय रहेको छ । यहाँ बिराजमान श्रीचण्डमहाशेषणको महत्त्व अत्यन्त ठूलो भएको कुरा विभिन्न बौद्ध ग्रन्थहरुले जनाउँछ । सह प्रा. डा. रञ्जना वज्राचार्यले तयार पार्नु भएको "**ललितपुर, इलांननीस्थित श्रीचण्डमहारोषण (श्रीसङ्कटा): एक अध्ययन**" ग्रन्थ पढ्ने अवसर पाएकोमा मलाई अत्यन्त खुशी लागेको छ । नेपाल, महायान बौद्ध धर्मको केन्द्र भएतापनि यहाँ महायान बौद्ध देवीदेवता सम्वन्धी कतिपय कुराहरु अझै अज्ञानतामै छन् । यी देवीदेवताहरुको प्राचीनता, महत्त्व र यिनका आयुध, आभूषण, मुद्रा, वस्त्रले के कुरालाई इङ्गीत गर्दछ भने राम्ररी जानकारी नभएको अवस्थामा प्रस्तुत ग्रन्थको प्रकाशनले इलांननी स्थित श्रीचण्डमहाशेषण देवता सम्वन्धी महत्त्वपूर्ण कुराहरु थाहा पाउन सक्ने मैले ठानेको छु । महायान देवी-देवताको अध्ययन र अनुसन्धान गर्न चाहनेहरुका लागि प्रस्तुत ग्रन्थ अत्यन्त लाभदायक हुनेछ । यस्ता ऐतिहासिक महत्त्वका देवता, विहार, देवालय आदिका बारेमा अध्ययन, अनुसन्धान गरी यस्ता कार्यमाथि आफ्नो सार्थक लेखनी चलाउने विदुषी लेखिकाप्रति धन्यवाद व्यक्त गर्दै भविष्यमा उहाँबाट अझै यस्तै ग्रन्थहरु प्रकाशित हुने आशा राख्दै उहाँको उत्तरोत्तर सफलताको कामना गर्दछु ।

ने. सं. ११२२
श्रावण १ गते

**पं. हेमराज शाक्य**
थैना, ललितपुर

# प्राक्कथन

नेपालमा स्थापना भएका देवीदेवताहरुको मूर्तिहरु ती चाहे काष्ठकला, धातुकला, प्रस्तरकलामा निर्मित होस् वा कपडामा चित्रण गरेको होस् ती मूर्तिहरुको अङ्ग, प्रत्यङ्गमा सुशोभित आभुषण र आयुधहरुले प्रतीकात्मक अर्थ प्रकट गरेको हुन्छ। विशेषतः बौद्ध देवीदेवताहरुको मूर्तिहरुमा सजाईएका 'आभुषण' लाई प्रतिमाको सुन्दरता र आकर्षक बढाउनका लागि मात्र नभई बौद्ध दर्शनको आधारमा विभिन्न विशुद्धि र ज्ञानको प्रतीक स्वरुप विभुषित गरिएको मानिन्छ। बौद्ध देवीदेवताहरुमा सुसज्जित पाँच आभूषणहरुमा - शिरोभूषणको रुपमा मुकुट (चक्रि), कर्णभुषणको रुपमा कुण्डल, हृदयीभुषणको रुपमा कण्ठी (जन्तर वा रत्नमाला), पादभूषणको रुपमा पाउजु (मेखला वा नुपुर) आभूषणलाई 'पञ्चाभुषण' को रुपमा मानिन्छ। यी पञ्चाभुषणलाई बुद्ध, बोधिसत्व र अर्हतहरुमा हुने भनिएको पाँच प्रकारका सर्वोच्च गुणहरु-सत्य (सम्यक् अनुसन्धान), शान्ति (सम्यक् सुख) महाकरुणा (सम्यक् स्वभाव), अनुत्तरबोधी (सम्यक् ज्ञान), र पारमिता (सम्यक् चर्या) को प्रतीकको रुपमा लिइएका छन्। त्यसैले कसैले देवीदेवताहरुलाई स्वचित्तले आभूषण प्रदान गर्नु पनि ठूलो पुण्य प्राप्त हुने कार्य मानिन्छ। यस्ता सत्कार्यले एक तरफ देवीदेवताहरुको प्रतिमालाई भौतिकरुपले सुसज्जित गरिन्छ भने अर्कोतर्फ आफ्नो धर्म संस्कृति र परम्परालाई संरक्षण र प्रवर्द्धन गरेको ठहरिन्छ। साथै यसले अरुलाई पनि यस किसिमका कार्य गर्न उत्साहित तुल्याउँछ।

यही कुरालाई हृदयङ्गम गरी नागवहालका निवासी स्व. श्रीआशाकाजी धाख्वाका नाति, श्रीआशारत्न धाख्वाका जेष्ठ सुपुत्र र मेरा आदरणीय दाज्यू श्रीपद्मरत्न धाख्वाले ललितपुर इलांननीस्थित गुह्यतले दिगी देवालयमा विराजित भगवान् श्रीचण्डमहारोषण वा श्रीसङ्कटा देवताको शिरोभूषणको रुपमा रहेको मुकट जीर्ण भएको हुनाले त्यस्को सट्टामा रत्नादिले सुशोभित चन्द्रकलाले युक्त नौवटा केटकी स्वाँ सहितको नवीन मुकुट, कुण्डल र रत्नमाला यही ने. सं. ११२२ गुँला धर्मारम्भको दिनमा भगवान् श्रीचण्डमहारोषणप्रति अर्पण गर्नु भएको छ। यही उपलक्ष्यमा सबैका आराध्यदेवता श्रीचण्डमहारोषणको बारेमा जनसमूदायलाई केही जानकारी होस् भन्ने अभिप्रायले यो ग्रन्थ लेख्ने प्रयास गरेकी हुँ।

यस लेखन कार्यलाई ग्रन्थको रुपमा ल्याउँन विभिन्न महानुभाव र क्वावाहाःका गुरू वज्राचार्य र आजुबाट ठूलो सहयोग मिलेको छ। सर्वप्रथम श्रीसङ्कटाको मूर्ति निर्माण कसरी भएको बारे जानकारी दिनु भएका इलांननीका स्थानिय निवासी

श्रीहर्ष बहादुर शाक्यज्यू र श्रीरुद्रराज शाक्यज्यूलाई म आफ्नो हृदय देखि धन्यवाद ज्ञापन गर्दछु। दिगी आगमगृहका बीस स्थविर आजुहरुमा चक्रेश्वरको पदमा आसिन श्रीन्हेच्छेबज्र बज्राचार्य, आजु आशारत्न बज्राचार्य, गुरुजू विक्रमराज बज्राचार्यलाई आवश्यक सुझाव र जानकारी दिनु भएकोमा आभार व्यक्त गर्दछु। बीस स्थविर आजुमा सम्मिलित नागवाहाःका आजु श्रीज्ञानबहादुर शाक्यज्यूले पनि हिरण्यर्ण महाविहार सुधार समिति मार्फत् अचेलका दश स्थविर आजु र बीस स्थविर आजुहरूको नामावली र क्वावाहाःका दुई आगमगृहमा सम्पन गर्नु पर्ने विविध पूजा र आर्थिक ब्यवस्थाबारे सूची उपलब्ध गराई दिनु भएकोमा उहाँप्रति कृतज्ञता ज्ञापन र धन्यवाद व्यक्त गर्दछु। दश स्थविर आजुमा सम्मिलित आजु रत्नराज बज्राचार्य र श्रीहर्ष बज्राचार्यलाई पनि आवश्यक जानकारीका लागि आभार व्यक्त गर्दछु। गुह्यतले दिगी देवालयमा स्थापित शिलापत्र र ताम्रपत्रको लिपि उतार्न सहयोग दिने श्रीदीपक बज्राचार्य र श्रीप्रचण्ड शाक्यलाई पनि धन्यवाद दिन चाहन्छु। यस पुस्तकमा समावेश गरेका फोटोहरु खिचेर सहयोग गर्ने श्रीअशोक बज्राचार्यलाई पनि धन्यवाद नदिइ रहन सकिदैन। पाण्डुलिपिमा शुद्धाशुद्धि हेरिदिनु हुने नेपाली विभाग, पद्मकन्या बहुमुखी क्याम्पसका उपप्राध्यापक श्रीप्रयागराज भट्टराईज्यू प्रति आभार व्यक्त गर्दछु।

यस ग्रन्थको पाण्डुलिपि अध्ययन गरी सुझाव र विभिन्न पुस्तकहरु प्रदान गर्ने तथा ग्रन्थका निमित्त आफ्नो मन्तव्य दिने विद्वान प. श्रीहेमराज शाक्यज्यू प्रति कृतज्ञता ज्ञापन गर्दछु। प्रस्तुत ग्रन्थ तयारीमा लागिपर्दा उत्साह प्रेरण दिनुहुने मेरा आदरणीय बुबाज्यू श्रीआशारत्न धाख्वाको सुस्वास्थ्य लाभ भई उहाँको धर्मकार्य अझ बढोस् तथा मेरा सबै परिवार प्रति सधैं उहाँको शुभ आशीर्वाद रहिरहोस् भन्ने कामना व्यक्त गर्दछु। साथै, यस ग्रन्थ लेखनलाई प्रकाशन गरिदिनु हुने मेरा आदरणीय दाज्यू श्रीपद्मरत्न धाख्वाज्यूलाई हृदयबाटै आभार व्यक्त गर्दछु।

अन्तमा यस ग्रन्थको प्रकाशनबाट सबै प्राणीहरुको संकष्ट मोचन र दशाहरण होस् भनी भगवान् श्रीचण्डमहारोषण प्रति प्रार्थना गर्दै यस ग्रन्थको अध्ययनबाट सर्वसाधारण पाठक वर्ग तथा अनुसन्धाताहरुले केही ज्ञान प्राप्त गरेर लाभ उठाएमा म आफ्नो प्रयासलाई सफल भएको ठान्ने थिएँ भन्ने कुरा पनि व्यक्त गर्दछु।

२०५९ श्रावण १ गते बुधवार

डा. रञ्जना बज्राचार्य
नक्साल, भगवतीबहाल, काठमाडौं

# प्रकाशकीय

ललितपुर, इलांननीस्थित गुह्यतले दिगी देवालयमा विराजित श्रीचण्ड-महारोषण (श्रीसङ्कटा) देवतालाई नौवटा केटकी स्वाँ सहितको सुनजलप चन्द्रकलायुक्त मुकुट, कुण्डल तथा रत्नमाला अर्पण गरेको उपलक्ष्यमा मेरी बहिनी रञ्जना वज्राचार्यले "ललितपुर इलांननीस्थित श्रीचण्डमहारोषण (श्रीसङ्कटा) : एक अध्ययन" नामक ग्रन्थ तयार पारी सो देवालय सम्बन्धी तथ्यलाई जन समक्ष प्रस्तुत गरेकोले मलाई अत्यन्त खुसी लागेको छ। यस कृतिको प्रकाशनले महायान देवता श्रीचण्डमहारोषण सम्बन्धी विभिन्न कुराहरु थाहा पाउन चाहने सबैलाई यथेष्ठ सहयोग मिल्नेछ भन्ने मैले ठानेको छु। साथै यस प्रसङ्गमा श्रीचण्डमहारोषणलाई अर्पण गर्ने मुकुट र प्रस्तुत ग्रन्थको प्रकाशनबारे केही कुरा व्यक्त गर्न चाहन्छु।

मेरो विहानको दैनिक कार्यक्रममा म सधैं ललितपुरको श्रीहिरण्यवर्ण महाविहारका देवताहरु, श्रीजटाधारी लोकेश्वर र इलांननीको श्रीचण्डमहा-रोषणको दर्शन गरेर घर फर्कन्थें। एक दिन दैव संयोगले श्रीसङ्कटा देवतालाई दर्शन गर्न जाँदा त्यहाँ उक्त देवताका पुजारी श्रीन्हुच्छेवज्र वज्राचार्य र कुटिवाहा:का श्रीभीमरत्न शाक्यको बीचमा देवताको मुकुट जीर्ण भएको हुनाले कुनै दाताले नवीन मुकुट अर्पण गरेमा निकै बेस हुने थियो भन्ने कुरा गरेको मैले सुनें। अनि म तत्काल सिधै आफ्नो घरमा आएर मेरो पूज्य बुबाज्यू श्रीआशारत्न धाख्वासँग सर-सल्लाह गरी उहाँको आज्ञा बमोजिम श्रीचण्डमहारोषण देवतालाई मुकुट, कुण्डल तथा रत्नमाला चढाउने निर्णय गरी ती आभूषणहरु बनाउने कार्यको थालनी तर्फ लागें। श्रीसङ्कटाको प्रतिमामा मुकुट अर्पण गर्ने शुभसमाचार घर का सबै परिवार र भाइ बहिनीहरुलाई पनि सुनाएँ। उक्त कुरा सुनेर खुसीमानी बहिनी रञ्जनाले दाजुको यो शुभकार्य गर्ने उपलक्ष्यमा सबैको संकष्ट मोचन देवता श्रीचण्डमहारोषण सम्बन्धी एउटा पुस्तक पनि प्रकाशित गर्न पाए निकै राम्रो हुने कुरा बताएपछि पुस्तक लेख्ने र प्रकाशन सम्बन्धी सबै कार्य हेर्ने बहिनीलाई नै सुम्पिदिएँ।

यो धर्मकार्य सम्पन्न गर्न मलाई धेरै व्यक्तिहरुबाट ठूलो सहयोग प्राप्त भएको थियो। ती सबै व्यक्तिहरुलाई म आफ्नो तर्फबाट धन्यवाद दिन चाहन्छु। सर्वप्रथम देवताको मुकुट, कुण्डल र रत्नमाला आभूषणहरु बनाउन ताम्रधातुबाट

कोरा कार्य सम्पन्न गर्नुहुने इखाछेँका श्रीफनकराज शाक्यज्यू (जेठा), सुन जलप कार्य गर्नुहुने सरस्वतीननीका श्रीगजराज शाक्यज्यू र ती आभूषणहरुमा जडान गर्न विभिन्न रत्नहरु प्रदान गर्नु हुने खाछेँका श्रीनेमरत्न शाक्यज्यू प्रति म हृदयदेखि धन्यवाद र कृतज्ञता ज्ञापन गर्दछु । साथै ती आभूषणहरुमा विभिन्न रत्नहरु मिलाई जडान गर्नु साथै आफ्नो तर्फबाट पनि विभिन्न रत्नहरु राख्ने वनगतका श्रीअशोक वज्राचार्य र मुकुटको माथिल्लो भाग सुसज्जित रहने चाँदीको नौवटा केटकी स्वाँ बनाएर सहयोग गर्नुहुने कुटीवाहाःका श्रीदीपक शाक्यज्यूलाई पनि धन्यवाद ज्ञापन गर्दछु ।

यसरी धेरै व्यक्तिहरुको मेहनतबाट निर्माण भएको मुकुट, कुण्डल तथा रत्नमाला आभूषणहरु श्रीचण्डमहारोषणलाई अर्पण गर्ने उपलक्ष्यमा प्रकाशित भएको प्रस्तुत ग्रन्थ म मेरो आदरणीय दिवंगत हजुरबुबा श्री आशाकाजी धाख्वाज्यूलाई समर्पित गर्दछु जसले भद्रपुर, झापामा D.B. Rice Mill स्थापना गरी त्यहाँबाट आएको आम्दानी रकमबाट धर्मकार्यको लागि छुट्याएको भारतीय रुपैयाँ १,००,०००|- (अक्षेरुपी एकलाख) द्वारा क्वावाहाःको गुम्बा र वतातले जीर्णोद्धार गरी बाँकी रकम गुह्यतले दिगी देवालयको जीर्णोद्धार कार्यका लागि उठाएको चन्दामा पनि लगाएका थिए ।

अन्तमा, यस शुभ अवसरमा प्रस्तुत ग्रन्थ तयार पारेकोमा बहिनी रञ्जना वज्राचार्यलाई उनको अध्ययन, अनुसन्धान क्रममा निरन्तरता आउनुको साथै थप पुस्तक लेखनमा उत्तरोत्तर सफलता मिलोस् भन्ने सदिच्छा व्यक्त गर्दै मेरा प्रत्येक सत्कार्यमा सहयोग र प्रोत्साहन दिने मेरी धर्मपत्नी सानुनानी धाख्वा तथा मेरा सम्पूर्ण परिवार प्रति धन्यबाद ज्ञापन गर्दछु र श्रीसङ्कटा देवतालाई आभूषणहरु अर्पण गरेको पूण्यद्वारा सम्पूर्ण प्राणीमात्रको संकष्ट हरण तथा दुःखमोचन होस् भन्ने कामना गर्दछु ।

श्री पद्मरत्न धाख्वा

ने.सं. ११२२ दिलाथ्व
वि. सं. २०५९ श्रावण १ गते बुधवार

## खण्डःएक

# श्रीचण्डमहारोषण वा श्रीसङ्कटाको परिचय

## (क) पृष्ठभूमि :

संसारमा आएको परिवर्तनले आजका मानिसको जीवनलाई एकातिर सुविधायुक्त तुल्याएको छ भने अर्कोतिर सङ्कटग्रस्त पनि बनाएको छ। यस सुविधा र सङ्कटका बीचमा मानिसले जसरी भएपनि आफ्नो अस्तित्वलाई कायमै राख्नु परेको छ। यसैक्रममा विज्ञानको चरम विकासका कारण सुविधाका साथ मानिसको जीवन पनि एक किसिमले आफ्नो र कतिपय अन्य व्यक्ति र बस्तुका कारणबाट नसोचेको स्थितिमा गुज्रिन पुग्दछ। यस बीच कतिपय परिस्थिति र मनस्थितिमा मानिस आफ्नो धर्म, संस्कृति, संस्कार र मन्त्रतन्त्रको सहारामा पुगेर विभिन्न किसिमका देवदेवी वा अलौकिक शक्तिको आराधना, उपासना, पूजा र प्रार्थना गर्दै आफूलाई सङ्कटबाट मुक्त गर्न लालयित हुन्छ। यसरी नचाहँदा नचाहँदै पनि मानिस र उसको संसार लौकिक, अलौकिक, आतङ्क, बाह्य तथा आन्तरिक अशान्ति, बाढी, पहिरो र दुर्भिक्ष जस्ता प्राकृतिक प्रकोप एवं विविध भय र आपत्तिबाट किन पीडित, त्रसित र ग्रसित हुन्छ ? भन्ने प्रश्न सवैका मनमा उठिरहन्छ। यस प्रश्नका थुप्रै उत्तर हुन सक्छन्। तर एउटा उत्तर हो - मानिसले आफूभित्र रहेको प्रज्ञा र विद्यालाई प्रस्फुटित गर्न नसक्नु र, दोस्रो उत्तर हो - मानिसका मनमा छिनछिनमा देखा पर्ने काम, क्रोध, लोभ, मोह, मद र मात्सर्य आदि गरिएका मानसिक विकृतिहरुले मानिसलाई दवाउनु। यसरी मानिस आफू भित्रका अज्ञान र मनोविकारवाट ग्रसित भएपछि ऊ भित्रको दया, मानवता, माया, सद्भावना र करुणा दबिएर एक पछि अर्को हुँदै जाँदा आजको मानिस विचलित र विसंगत जीवन बाँच्न बाध्य बनेको देखिन्छ।

यस्तो अस्थिर र आतङ्कपूर्ण वातावरणमा शान्ति-स्वस्ति, सुभिक्ष, आयु, आरोग्यको कामना गरी मानिसहरुले विभिन्न देवीदेवताको मठ मन्दिरमा गएर पूजा, जप र आराधना गरी सुखशान्तिको याचना गरिरहेको पाइन्छ। यस्ता काम गरेर आफू, आफ्नो समाज र देशको हीत गर्ने प्रयास पनि गरेको पाईन्छ। यस्तो धार्मिक र सामाजिक सत्कार्यमा लाग्ने परम्परा हाम्रो नेपाली समाजमा

परापूर्व कालदेखिनै रहेको देखिन्छ। यसरी अशान्ति र संकष्टहरणका लागि आराधना गर्ने मुख्य मुख्य देवताहरुमा भगवान् श्रीचण्डमहारोषण वा श्रीसङ्कटा पनि एक प्रमुख मानिन्छ। नेपालका बौद्ध तथा हिन्दू सम्प्रदायका अनुयायीहरुले श्रीसंङ्कटालाई आफ्नो आफ्नो ढंगले पूजा, उपासना गरी धार्मिक-सहिष्णुता सह-असित्वका भावना कायम गरेको समेत देखिन्छ। श्रीचण्डमहारोषण तान्त्रिक बौद्धदेवता हुन, जो दशक्रोध भैरव मध्ये एक मानिन्छन् [१]।

सर्वसाधारण मानिसहरुले यी देवतालाई श्रीसङ्कटाको रुपमा उपासना गर्ने प्रचलन निकै रहेको देखिन्छ। प्रत्येक शनिवार र मंगलवारका दिनमा श्रद्धालु भक्तजनहरु आफ्नो आफ्नो दुःखकष्ट, संकट, रोग-व्याधि, विघ्नवाधा आदि द्वारा हुने अशान्ति, अशुभ, अस्वस्थताबाट मुक्ति पाउँ भन्ने हेतुले श्रीसङ्कटाको दर्शन, पुजा र उपासना गर्न जाने गर्दछन्। धेरैजसो मानिसहरु आफ्नो जन्मदिनमा पनि ग्रहदशा विग्रेर हुने संकटादशा नलागोस् भन्ने आसयले आचार्यहरुद्वारा तान्त्रिक विधिद्वारा पूजा-पाठ र जप गराउने प्रचलन पनि पाइन्छ। त्यसैले भगवान् श्रीचण्डहारोषणलाई बिघ्नहरण कर्ता र संकष्ट तारिणी देवताको रुपमा धेरै महत्त्व दिएर उपासना गरेको देखिन्छ। भक्तजनहरुका यी देवता प्रति ठूलो श्रद्धा र विश्वास छ र तत्काल फल दिने देवताहरुमा श्रीसङ्कटा पनि एक हुन् भनी उल्लेख भएको पाइन्छ। यी देवताको वाहिरी स्वरुप भयानक र डरलाग्दो देखिएता पनि भक्तिभाव गर्नाले अशान्ति, उपद्र, अमंगल आदि निवारण भई मंगल हुने कुरामा सवैको विश्वास देखिन्छ। त्यसैले यी देवतालाई मंगलकारी देवताको रुपमा पनि हेरिन्छ र धेरै जसो भक्तजनहरु प्रत्येक दिन यिनको दर्शन र पूजाआजा गर्न जाने पनि गर्दछन्। भगवान् श्रीचण्डमहारोषण वा श्रीसङ्कटाको प्रतिमा धेरै कम मात्रामा बनेको देखिन्छ। ललितपुर भरिमा श्रीचण्डमहारोषणको मूर्ति प्रसिद्ध हिरण्यवर्णमहाविहारको संगै इलांननी टोलमा मात्र स्थापना गरिएको पाइन्छ भने काठमाडौंमा श्रीसङ्कटाको प्रतिमा न्यूरोडको शाहि नेपाल बायु सेवा निगमको ठीक पछाडि राजकीर्ति महाविहार (टेवाहाः) मा स्थापना गरिएको पाइन्छ। इलांननीको श्रीसङ्कटालाई तान्त्रिक बौद्ध देवता

---

१. दशक्रोधभैरवः

(क) यमान्तक (ख) प्रज्ञान्तक (ग) पद्मान्तक (घ) विघ्यान्तक (ङ) अचल

(च) टक्किराज (छ) नीलदण्ड (ज) महाबल (झ) उष्णीषचक्रवर्ती (ञ) सुम्भराज

"धर्मसंग्रह"

श्रीचण्डमहारोषण र दशक्रोधभैरवमा अचल वा अचलान्तकको रुपमा मानिन्छ भने टेवाहा:को श्रीसङ्कटालाई पद्मान्तकको रुपमा मानिन्छ। इलांननीको श्रीसङ्कटालाई भक्तजनहरुले देवताको प्रतिमा छोएर ढोग्न र भक्तिभाव गर्न सकिन्छ भने टेवाहा:को श्रीसङ्कटा देवीलाई प्रतिमाको अगाडि जालीका बार राखेको हुनाले देवीलाई छोएर भक्तिभाव गर्ने अवसरबाट बन्चित भएका छन्। त्यसैले कोही कोही काठमाण्डौंका भक्तजनहरु पनि इलांननीको श्रीसङ्कटा कहाँ आएर पूजा पाठ गर्न आउने गर्दछन्। यी दुबै श्रीसंङ्कटाको स्थलहरुमा प्रत्येकदिन भक्तजनहरुको ठूलो भीड लागेको देख्न सकिन्छ, जसबाट के अनुमान गर्न सकिन्छ भने श्रीसङ्कटा कल्याणकारिणी छन्, आशुटोष छन् भक्तजनहरुको तुरुन्त इच्छापूर्ति गर्ने स्वभाव र शक्ति उनमा छ। भक्तपुरमा भने श्रीसङ्कटा पूजा प्रतीकको रुपमा रहेको श्रीसङ्कटाको शिलाको पूजा गर्ने प्रचलन देखिन्छ। भक्तपुरमा यो श्रीसङ्कटाको प्रतीकको रुपमा रहेको शिला महाकाली पीठ पछाडि अवस्थित छन्। श्रीसङ्कटा दशक्रोध भैरव मध्ये एक मानिन्छ र डरलाग्दो स्वरुपको भैरव उपासना उपत्यकाको विशेषता हो।

मानिसहरुले आजसम्म पनि आफ्नो घर, राज्य र विश्वमा अनेक प्रकारको विघ्नवाधा, अशान्ति र आंतकित हुने बेलामा गुरु आचार्यद्वारा विभिन्न मण्डलहरु निर्माण गरी श्रीसंङ्कटाको पूजा तान्त्रिक विधिद्वारा गरेको खण्डमा शान्ति-स्वस्ति हुने विश्वास गरी यस परम्परालाई यथावत् कायम गरेका पनि पाइन्छ। यी विभिन्न कारणहरुले गर्दा श्रीचण्डमहारोषण वा श्रीसंङ्कटा देवताको महत्त्व प्राचीनकाल देखि नेपाली समाजमा निकै बढेको देखिन्छ। श्रीसंङ्कटाका उल्लेख चण्डमहारोषणतन्त्र, कलवीरतन्त्र साधनमाला, आर्यगुह्यसमाजतन्त्र, धर्मसंग्रह र अरु विभिन्न तान्त्रिक बौद्ध ग्रन्थहरुमा विशेषरुपमा पाइन्छ।

## (ख) प्राचीनता:

बिशेषगरी काठमाण्डौं उपत्यकाको बौद्ध समाजमा विद्यमान धर्म-संस्कृति, संस्कार, बास्तुकला, मूर्तिकला, तन्त्रमन्त्र आदिमा महायानको साथै बज्रयान परमपराको गहिरो छाप परेको देखिन्छ। बुद्धधर्ममा बज्रयानको विकास भएपछि पन्चध्यानी बुद्ध सम्बन्धी धारण विकसित भएको मानिन्छ (Bhattacharyya 1993:xxvi)। नेपालको बौद्ध समाजमा पन्चध्यानी बुद्धहरुलाई धेरै मान्यता

दिएको पाइन्छ, जुनकुरा आदिबुद्ध ज्योतिरुप पञ्चबुद्धात्मक श्री स्वयम्भू महाचैत्यले राम्ररी दर्शाएको छ। यी पञ्चबुद्धहरुको नाम यस प्रकार छ :

(१) वैरोचन (२) अक्षोभ्य (३) रत्नसंभव (४) अमिताभ (५) अमोघसिद्धि

उपर्युक्त पञ्चध्यानी बुद्धहरुको वर्ण, मुद्रा, वाहन र चिन्हहरु भिन्दा भिन्दै छन्। यी पञ्चध्यानी बुद्धहरुको कुल परम्रानुसार धर्मकाय, सम्भोगकाय र निर्माणकाय स्वरुप भएर उत्पति भएका पञ्चकुल (चक्रकुल, बज्रकुल, रत्नकुल, पद्मकुल र कर्मकुल) का कतिपय देवी देवताहरु प्रकाशमा आएका छन्। ती सबै नै बाह्य, गुह्य अभ्यन्तररुपले आ-आफ्नो अधिकार र कर्तव्य अनुसार अचित्य उपायकुशल धारण गरी जगत्सत्व प्राणीहरुलाई निश्चित रुपले सुधार र उद्धार हुने यथार्थ मार्ग निर्देशन गरेको भयो (शाक्य :२०४९:ज)। यी संम्पूर्ण देवीदेवताहरु महायान अन्तर्गत तन्त्रबज्रयान, सहजयान, कालचक्रयान अनुसार परम्परागत विराजमान भएका बुद्ध बोधिसत्व र धर्मपाल, लोकपाल तथा दिक्पाल आदि देवीदेवताहरुको सन्तति प्रवाह धेरै छ भनी सूत्रतन्त्रमा वर्णन गरेका पाईन्छ (शाक्य:२०४९:ज)।

यसरी पञ्चबुद्धबाटै बुद्ध, बोधिसत्व र अरु विभिन्न बौद्ध देवीदेवताहरुको प्रादुर्भाव वा उत्पत्ति भएको मान्यता छ। यी पञ्चध्यानी बुद्धहरुमा अक्षोभ्यबाट धेरै देवीदेवताहरु प्रादुर्भाव भएको देखिन्छ। किनकि अक्षोभ्यबुद्ध सर्वप्राचीन तथागत हुन जो बौद्ध सर्वदेवको गणनाको रुपमा भित्रिएको पाईन्छ (Bhattacharyya: 1993:60)। साधनमालामा नीलवर्ण, भूस्पर्श अक्षोभ्यसंग डरलाग्दा र भयकंर रुपका देवताहरुको साथै विभिन्न तन्त्रहरु पनि संलग्न भएको देखाइएका छन्। अक्षोभ्यबाट उत्पन्न भएका मञ्जुश्रीका विभिन्न रुपहरु बाहेक उनीबाट उत्पन्न भएका अरु जम्मा नौंजना पुरुष देवताहरु उल्लेख हुनुको साथै यी देवताहरुलाई पूजा, आराधना र ध्यान गर्ने अनेकौं साधन र विधिहरु साधनमालामा उल्लेख भएको पाइन्छ। यी देवताहरु चण्डरोषण, हेरुक, बुद्धकपाल, संवर, ह्यग्रीव रक्तयमारी, कृष्णयमारी, जम्भल, उच्छुष्म-जम्भल हुन् (Bhattacharyya: 1993:60)। नेपालमा यी देवताहरुलाई तान्त्रिक देवताको रुपमा मान्यता दिई विभिन्न बाहा: आगमगृहहरुमा स्थापना गरेको पाइन्छ र यिनीहरुको पूजा पनि तान्त्रिक विधिविधान अनुसार गरिन्छ।

खण्डःदुई

# ललितपुर, इलांननीस्थित श्रीचण्डमहारोषण वा श्रीसङ्कटा

## (क) परिचयः

नेपालको बुद्धधर्म-संस्कृतिमा ललितपुर इलांननीस्थित श्रीचण्डमहारोषणको ठूलो महिमा रहेको छ । श्रीचण्डमहारोषण बौद्ध तान्त्रिक देवता भएतापनि यिनको बौद्धहरुको साथसाथै हिन्दु धर्मावलम्वीहरुले पनि उत्तिकै श्रद्धा र भक्तिभावका साथ पूजाआजा गर्ने परम्परा रहेको देखिन्छ । मानिसले आफ्नो जीवनमा सामना गर्नुपर्ने अष्टमहाभय-राजभय, चोरभय, शत्रुभय, बज्रभय, अग्निभय, वायुभय जलभय र भूकम्पभयको साथै विपत्ति, दुःख पीडा निवारणका लागि विभिन्न देवीदेवताहरुको पूजा उपासना गर्ने क्रममा विशेषगरी श्रीचण्डमहारोषण वा श्रीसङ्कटालाई दुःख, विघ्न र संकट मोचनकर्ताको रुपमा पूजा गरिन्छ । यही विश्वासका साथ इलाननीस्थित गुह्यतले दिगि देवालयमा विराजित श्रीचण्डमहारेषणलाई बौद्ध, शैव, बैष्णव धर्मावलम्वीहरुले आ-आफ्नो सम्प्रदाय र तान्त्रिक पद्धति अनुसार श्रद्धा र पूजापाठ गर्दछन् । श्रीचण्डमहारोषणको प्रतिमा अरु देवीदेवताहरुको दाँजोमा धेरै कम मात्रामा निर्माण भएको देखिन्छ । ललितपुरमा केवल एउटै स्थानमा मात्र यस देवताको मूर्ति अवस्थित रहेको पाइन्छ त्यो हो ललितपुरको 'इलांननी' जसको सम्बन्ध ललितपुरकै प्रसिद्ध वाहाः हिरण्यवर्ण महाविहार अर्थात् क्वावाहाः सित रहेको छ ।

## (ख) नामाङ्कन :

साधनमालामा यी देवतालाई चण्डरोषण, महाचण्डरोषण, चण्डमहारोषण र अचल भनी नामाङ्कन गरेको पाइन्छ (Bhattacharyya :1993:60) । बज्रयानीहरुले दशक्रोध तान्त्रिक देवतामध्ये पाँचौं स्थानको अचल वा अचलान्तक देवताको रुपमा इलांननीको श्रीसङ्कटाको पूजा उपासना गर्ने प्रचलन पाइन्छ । यी बाहेक श्रीसङ्कटालाई पद्मान्तक र संकष्ट-तारिणी भनेर पनि सम्बोधन गर्ने गर्दछन् । भक्तजनहरुले श्रीसङ्कटालाई भगवतीको रुपमा श्रीसङ्कटा देवी (टेवहाल)

भनेर मान्ने गर्दछन् भने श्रीसङ्कटादशा हरणका लागि पूजा, पाठ, जप र प्रार्थना गर्ने प्रचलन पाइन्छ। त्यसैले यी देवतालाई 'श्रीसङ्कटा' भनी नामकरण गरेको अनुमान हुन्छ। यिनको प्रतिमा हेर्दा बडो भयानक र डरलाग्दो देखिएता पनि यिनलाई 'दुष्टमारविनाशक' र 'अहिंसक' भनेर वर्णन गरेको पाइन्छ। विशेष गरी जन्मदिनमा यिनको पूजा, पाठ, जप र प्रार्थना गरेको खण्डमा विभिन्न विघ्नवाधा र सङ्कटादशा निवारण भई मंगल हुने हुनाले यिनलाई मंगलकारी देवाताको रुपमा उपासकहारुले लिएको पाइन्छ।

## (ग) श्रीचण्डमहारोषणको स्वरूपः

बौद्ध ग्रन्थ साधनमाला अनुसार पञ्चध्यानी तथागत मध्ये अक्षोभ्य तथागतबाट उत्पन्न वा प्रादुर्भाव भएका पुरुष देवाताहरुमा जम्भल बाहेक अरु सबै देवताहरुको मुखाकृति डरलाग्दा र भयानक रुपमा देखाइएका छन्। यी देवताहरुलाई प्रतिमाहरुमा नीलो वर्ण, विकट मुखमण्डल भएका, त्रिनेत्रधारी, तीक्ष्ण स्वभाव भएका, जिब्रो बाहिर निकालिएका, मुण्डमालाधारी, बाघको छाला बेरेका, गलामा सर्पको माला धारण गरेको देवताको रुपमा उत्कीर्ण गर्ने चलन रहेको पाइन्छ (Bhattacharyya:1993:60)।अरु विभिन्न तान्त्रिक ग्रन्थहरुमा पनि श्रीचण्डमहारोषणको नीलोवर्ण, भयानक मुखाकृति र मुकुटमा पञ्चध्यानी बुद्धहरु धारण गरिएको वर्णन पाइन्छ। भक्तजनहरुले पनि श्रीचण्डमहारोषण सम्मुख प्रार्थना, पूजा गर्दा देवताको स्वरुप वर्णन गरी निम्न अनसारका स्तुति गर्ने प्रचलन धेरै पाइन्छ :

*नीलवर्ण महावीर खड्ग पाशकं तर्जनी।*
*सर्वदुष्ट हरंताच अचलवीरं नमाम्यहम्॥*

ललितपुर, इलांननीस्थित श्रीचण्डमहारोषणको मूर्तिको आङ्गिक र शारीरिक संरचना तान्त्रिक बौद्ध प्रतिमा शास्त्रीय अनुसार निर्माण भएको देखिन्छ। धातुबाट बनाएको श्रीचण्डमहारोषणको प्रतिमा ज्यादै आकर्षक, बलिष्ठ र हृष्टपुष्ट भई उत्तर दिशातर्फ हेरी विराजमान भएका छन्। श्रीसङ्कटाको मुखाकृत्ति ज्यादै भयानक र कठोर भएतापनि तेजिलोपन झल्किन्छ। शरीरको भाग बडो साधा ढंगले निर्माण भएको छ। देवताको मुखाकृत्ति त्यति लाम्चो

नभएर गोलाकार छ, जसको माथि शिरभागमा मुण्डसहित चन्द्रकलायुक्त रत्नमुकुट सुसोभित छ, जुन अति जीर्ण अवस्थामा छन् । साथै, गोलाकार डरलाग्दा त्रिनेत्रधारी, आँखीभौ माथितिर उठेको, ठूला नाक, ठूलो चिउँडोयुक्त, मुख बाएको, दायाँबायाँको ठूला दाँत (धःवाः)ले ओठ टोकेको, विकट मुखको माथि दुबैतर्फ जुंगा भएको श्रीचण्डमहारोषण क्रोधराज हुन् । यिनी त्रिनेत्रधारी हुनुको अर्थ यिनको सर्वव्यापी अन्तर्दृष्टि जनाउँछ जसद्वारा उनी सम्पूर्ण ब्रह्माण्डलाई जुनसुकै बेलामा पनि छर्लङ्ग देख्न सकिन्छ र सर्वप्राणीहरुको संकष्ट र विघ्न निवारणका लागि तत्पर रहेको संकेत गर्दछ । दुवै कानमा आभूषणको रुपमा ठूला-ठूला रत्नजडित पद्मकुण्डलहरु झुण्डिएका छन् । यस मूर्तिका दुई हातहरु मध्ये दाहिने पट्टिको हात माथि उठी खड्ग आयुध धारण गरेका छन्, जसले शिरको मुकुट छोएको छ भने वायाँपट्टिको हात छातिसम्म ल्याई तर्जनीपाश वा डोरी आयुध समाई अंकुश मुद्रामा अर्थात् चोर औंला र बूढी औंला जोडिएको मुद्रामा देखाएका छन् । उनको दाहिने हातको आयुध खड्ग शक्ति र सामर्थ्यका शस्त्रको प्रतीक देखिन्छ जसले दुष्टमारहरुलाई विनास गर्दछ । बायाँ हातमा लिएका तर्जनी पाशको अर्थ कुमार्ग र कुविचारमा लागेका मानिसहरुलाई तानेर सुमार्गमा लगाउनु हो । पाशको अर्को अर्थ मानिसहरुलाई जकड्ने अनन्त इच्छा र कामनाको बन्धन वा पाशो हो जसमा बेरिएर मानिस दुःखको भूमरीमा डुबेको हुन्छ । त्यस्ता मानिसलाई बन्धनमुक्त गर्ने यो तर्जनी पाशलाई दुःखको भूमरीबाट पार लगाउने कारणको प्रतीक मानिन्छ । अर्थात् यस्तो संकटको समयमा श्रीचण्डमहारोषणको स्मरण र आराधना गरेको खण्डमा बन्धन वा पाशबाट मुक्त हुने सन्देशको रुपमा श्रीचण्डमहारोषणको तर्जनी पाशलाई लिएको पाइन्छ । उनको दुबैहातमा रहेका खड्ग र पाश आयुधहरु कुन कुन सत्कार्य सिद्धिका लागिका प्रयोग हुन्छन् र यिनी खड्गनाथलाई मानिसले निम्नानुसार प्रार्थना गरिएको पाइन्छः

*हिंसा नगर्ने खड्ग लिने,*
*दुष्ट मान्छेलाई बाँध्नका लागि पास (डोरी) लिने*
*सम्पूर्णका शरण स्वरुप भएका,*
*शक्तिको कार्यमा तत्पर*

*दुष्टजनबाट उत्पन्न मारलाई नासगर्ने,*
*यस्ता खड्ग नाथलाई मेरो नमस्कार छ।*

यस दृष्टिबाट हेर्दा श्रीचण्डमहारोषणलाई संकष्टहरणकर्ता विघ्नहर्ता भनेर जुन नामले सम्वोधन गर्ने परम्परा पाइन्छ, त्यो ज्यादै उपयुक्त देखिन्छ। श्रीसङ्कटाको शरीरको कम्मर माथिको हृष्टपुष्ट भाग खुल्ला छोडी कम्मरदेखि मुन्तिरको भागमा दाहिने खुट्टाको पाइतला बाहिर निकाली साधा धर्सो बुट्टा भएको घाङ्गर वा जामाले तलसम्म आउने गरी छोपिएको छ भने बायाँ खुट्टाको घुंडाले तल भूईमा टेकी बायाँ पाइतला भित्ता तर्फ फर्काई अर्थात् अवनीनिहीतज्ञानुहम् मुद्रा प्रस्तुत गरिएको छ। हालसालैमात्र देवतालाई विभिन्न बस्तुहरु चढाउनका लागि बायाँहातमाथि एउटा पात्र राखिएको छ। श्रीसङ्कटाको यो प्रतिमा कमलको बुट्टा भएको प्रस्तरको पद्मासन माथि स्थानक (उभिएको) मुद्रामा छन्। देवताको मुकुट र पद्मकुण्डल बाहेकको अरु अंग प्रत्यङ्गमा कुनै आभूषण छैन बडो साधारण ढंगले मूर्ति प्रस्तुत भएको देखिन्छ। बायाँ तर्फ मर्काई बनाईएको श्रीसङ्कटाको सम्पूर्ण शारीरिक संरचना हेर्दा ज्यादै आकर्षक र बडो कलापूर्ण रहेका छ। साथै यो मूर्ति प्रतीकात्मक ढङ्गले निर्माण भएको देखिन्छ। यस प्रतिमाको नाप माथि मुकुट देखि तल पद्मासन सम्म करिव ४७ इञ्च लम्बाई रहेको छ। स्थानीय बासिन्दा (श्रीहर्ष बहादुर शाक्य) को भनाइ अनुसार सम्पूर्ण प्रतिमाको तौल लगभग अठाऱ्ह धार्नी (१८ धार्नी) रहेको छ। *(आवरण चित्र)* श्रीसङ्कटाको मूर्ति पछाडि प्रभामण्डलको रुपमा काष्ठकला सुशोभित देखिन्छ। श्रीसङ्कटाको प्रतिमाको ठीक बायाँपट्टि कुनामा प्रस्तरका चार मूर्तिहरु पनि सजाईएका छन् जुन चौरासी शिद्धहरु मध्ये चारजना सिद्धहरुको स्वरुप हुन सक्ने देखिन्छ। *(चित्र नं. १)* त्यस्को ठीक बायाँपट्टि सानो ग्वाखलमा प्रस्तरकै एक नाग़राजको मूर्ति पनि प्रस्तुत गरिएको पाइन्छ।

## (घ) श्रीचण्डमहारोषणको पूजागर्ने विशेष तिथि, व्रत र संकटा दशाः

श्रीचण्डमहारोषणलाई संकष्ट तारिणी देवी र सङ्कटादशाहरणकर्ता देवताको रुपमा मान्यता दिएको हुनाले भक्तजनहरु प्रत्येक शनिबार र मंगलबार दिनका साथै आ-आफ्नो जन्मदिनमा आयु, आरोग्य, शान्ति र संकटादशाहरणका




*चारजना सिद्धहरूको प्रस्तर प्रतिमा*

लागि यस इलांननीस्थित श्रीसङ्कटाको पूजा उपासना गर्न जान्छन्। ज्योतिषशास्त्र अनुसार मानिसहरुलाई विभिन्न बाह्र राशि र सत्ताइस नक्षत्रद्वारा अष्टयोगिणी दशा लाग्ने गर्दछन्। यी अष्टयोगिणी दशा के के हुन् , कति बर्ष लाग्ने (अवधि) र कुन दशा लाग्दा कुन देवताको पूजा, उपासना गर्ने कुरा रुद्रयामलोक्तायोगिणीदशान्त दशाचक्रम् शास्त्र अनुसारका निम्न अनुसार तालिका बाट जान्न सकिन्छ :

## अष्टयोगिणी दशाको नाम, अवधि, पूजा गर्नुपर्ने देवताको नाम वार

| अष्टदशा | मंगला दशा | पिंगला दशा | घान्या दशा | भ्रामरी दशा | भद्रिका दशा | उल्का दशा | सिद्धा दशा | सङ्कटा दशा |
|---|---|---|---|---|---|---|---|---|
| अवधि | १ बर्ष | २ बर्ष | ३ बर्ष | ४ बर्ष | ५ बर्ष | ६ बर्ष | ७ बर्ष | ८ बर्ष |
| पूजा गर्नु पर्ने देवता | चन्द्रमा (चन्द्र) | सूर्य (सूर्य) | वृहस्पति (देवद्यो) | मंगल (गणेश) | बुध (चैत्य) | शनिश्चर (पीठ) | शुक्र (भुवनेश्वरी) | राहु (भैरव) |
| पाठ गर्ने वार | सोमबार | आइतबार | विहिबार | मंगलबार | बुधबार | शनिबार | शुक्रवार | मंगलवार र शनिवार |

ज्योतिषशास्त्र अनुसार योगिणी दशा लाग्दा मानिसहरुलाई निम्न अनुसारको अष्टमहाभय आउने संभावना मानिन्छ :

(१) जनानाविवादं (मान्छेसंग झगडा हुने)

(२) ज्वराणा प्रकोपं (ज्वरो आउने)

(३) धनादिश्वदारादिकानां वियोगम् (संपत्ति, घोडा र पत्नीसंग वियोग हुने )

(४) स्वगोत्रं विवादं (आफ्ना गोटियारका बीच विवाद)

(५) सुहृतवंधुवैरं (आफ्नो छरछिमेकी र इष्टमित्रमा शत्रुता बढ्ने )

(६) पशुनांविनाशं (घरपालुवा पशुपंछिको विनाश हुने)

(७) संकष्टराजपक्षात् (राजाबाट आउने संकट वा प्राणदण्ड हुने संभावना)

(८) प्राकृतिक प्रकोप (प्रकृति जन्य दुःख)

यी अष्टमहाभय हुन बाट जोगाउन मानिसहरुले आ-आफ्नो चिना (जातः) ज्योतिषीहरु कहाँ देखाई उनीहरुको सल्लाह बमोजिम बिभिन्न देवीदेवतालाई अनेक पूजा साम्रग्रीद्वारा पूजा, उपासना र जप गराउने प्रचलन पाइन्छ। त्यस्मा पनि कसैलाई राहु ग्रहले गर्दा आठ वर्षसम्म सङ्कटादशा लागेको खण्डमा सङ्कटालाई भैरव मानी पूजा गर्ने पनि प्रचलन पाइन्छ। किनकि सङ्कटा, भैरवको एक रुप हो। धर्म-संग्रह ग्रन्थ अनुसार दशक्रोध भैरवमा पाँचौं स्थानमा अचलको नाम आउँछ भने साधनमाला ग्रन्थ अनुसार पनि श्रीचण्डमहारोषणलाई 'अचल' नामले संवोधन गरेको पाइन्छ। आर्यश्रीगुह्यसमाजतन्त्रमा "विघ्नैन चाल्यत इत्यचलः विघ्नानामान्ध्योत्पादना काणः" अर्थात् अचल भनेको विघ्न बाधाले चलाउन नसकिने र विघ्नलाई आँखाले देख्न नसकिने बनाउने भनिएको हो (वज्राचार्यः२०५८:३८९-३९०)। त्यसले विघ्न बाधा, सङ्कटादशा हटाउन श्रीचण्डमहारोषण, श्रीसङ्कटा वा अचललाई पूजा र उपासना गर्नु अनिवार्य मानिन्छ। विशेष गरी जन्मदिवसमा देवताको पूजा गर्न सामान्य पूजा समाग्री बाहेक निम्नानुसारको साम्रग्री राखी पूजा गर्ने प्रचलन पाइन्छः

(१) कालो कपडा
(२) कालो भटमास
(३) फलामे खड्ग
(४) फलामे पात्र
(५) सिसाको भेडा
(६) गेडा मास
(७) गहत (क्वलः)
(८) उसिनेको फुल
(९) सम्हय् सामग्री (सम्हय् ज्वलं)

यी सामाग्री राखी पूजा गरेको खण्डमा संङ्कटादशा हरण हुने मान्यता रहेको पाइन्छ। कसैले दशा फाल्नका लागि आचार्य बज्राचार्यद्वारा श्रीसंङ्कटा कहाँ २७००० पटक जप गराउने प्रचलन पनि देखिन्छ र जप गराए वापत रू.१८९।- पूजारीलाई दिने गर्दछन्। नेवार समाजमा देवीदेवताको तान्त्रिक पूजा गर्दा अन्य पूजा समाग्री बाहेक सम्हय् समाग्री अनिवार्य मानिन्छ। यसको बेग्लै महत्त्व देखिन्छ। श्रीचण्डमहारोषण तान्त्रिक देवता भएको हुनाले पूजा गर्दा सम्हय्को समाग्री (सम्हय् ज्वलं)मा चिउरा सहित स्यावजी (गोलो फुल्याएको चिउरा), कालो भटमास, अधुवा, छ्वयला (साँधेको मासु) र रक्सी गरी पाँच परिकार चढाउने गर्दछन्। तान्त्रिक मतमा सम्हय् पञ्चतत्वको प्रतीक मानिन्छ। स्यावजीमा आकासतत्व, कालो भटमासमा वायुतत्व, अधुवामा जलतत्व, मासुमा पृथ्वीतत्व र रक्सीमा तेजतत्वका गुण विद्यमान हुन्छ (बलदेव जुजु, सुरेन्द्र मान श्रेष्ठ : ११२० : ११)। यस देवालयको चक्रसम्वर र श्रीसङ्कटाको नित्यपूजा गर्दा दिनहुँ पात्रमा सम्हय् ज्वलं राखी पूजा गर्नु अनिवार्य छ। किनकि तान्त्रिक पूजामा देवीदेवतालाई सम्हय् चढाउनै पर्ने हुन्छ। पहिलेका गुरू बज्राचार्यले तान्त्रिक विधिद्वारा सम्हय् चढाई तान्त्रिक शक्ति र सिद्धि प्राप्त गरेका कुराहरु प्रसस्त छन्। शान्तिकर आचार्य, बन्धुदत्त आचार्य, जामनः गुभाजु, शाश्वत वज्राचार्य, गुणाकराचार्य, गुणदत्ताचार्य, अभयंकराचार्य आदि नेपालका महान तान्त्रिकहरु हुन्।

तान्त्रिक विधि अनुसार देवीदेवतालाई चढाउने सम्हय् जीववलिको प्रतीक भनेर पनि मानिन्छ (बल देव जुजु, सुरेन्द्र मान श्रेष्ठ : ११२० : ११)। पहिले पहिलेका तान्त्रिकहरुले सम्हय् ज्वलंबाटै अयोनिज जीव सृष्टि गरेर मात्र बलि भोग दिई अहिंसा महाबलि पूजा गर्ने गर्दथे। पछि अयोनिज जीव सृष्टि गर्न नसक्दा साच्चिकै जीवजन्तु बलि चढाउँन थाल्यो भने कसैले जीबबलिको रुपमा सम्हय् बनाएर मात्र देवी देवतालाई चढाउँन लागे। कसैले सम्हय्को पाँच परिकारलाई पञ्चबुद्धको प्रतीकको रुपमा मानिन्छ भने कसैले सम्हय्को साथमा बोडी, बारा, माछा, फुल समेत राखी अष्टमातृका देवीको प्रतीक मानी देवीदेवतालाई चढाएर खाने प्रचलन पनि देखिन्छ। (बलदेव जुजु, सुरेन्द्र मान श्रेष्ठ : ११२० : ११)। मानिसहरुले ग्रहदशा आउँदा आत्मारक्षाको कामना गरी महाकाल (मांकाद्यः), सङ्कटा (पालाःद्यः), कालभैरव (कालभैलःद्यः)को स्थानमा

फुल सगुन (ख्यैं सगं) राखी पञ्चमकार सहित पूजा गर्न जाने प्रचलन पनि पाइन्छ। तान्त्रिक मत अनुसार पञ्चमकारमा मद्य(रक्सी) मांस (मासु), मत्स्य (माछा), मुद्रा (मासको बारा) र मैथुन (फुल) गरी जम्मा पाँच बस्तुहरु समाबेश भएको हुन्छ । तान्त्रिक मतमा यी पञ्चमकार बस्तुहरु मध्ये रक्सीहलाई तेज, मासुलाई पृथ्वी, माछालाई जल, मासलाई बायु, फुललाई आकासतत्वको रुपमा राखी बलिपूजा गर्ने प्रचलन पाइन्छ (बलदेव जुजु, सुरेन्द्र मान श्रेष्ठ : ११२० : १९)।

इलांननीस्थित श्रीसङ्कटा तान्त्रिक बौद्ध देवता भएको हुनाले यहाँ कलवीरतन्त्र पाठ गरिने प्रचलन छ। अहिले यस गुह्यतले दिगी देवालयमा बीसस्थवीर आजुहरुमा चक्रेश्वर पदमा आसिन ७७ बर्षिय आजु श्रीन्हुच्छेबज्र बज्राचार्य हुनुहुन्छ (वि.सं. २०५९ श्रावण १ गते)। उहाँले यस गुह्यतलेदिगी आगमगृहको मुख्य तान्त्रिक देवता चक्रसंम्वर बज्रबाराही तथा श्रीचण्डमहारोषणको नित्यपूजा बाहेक प्रत्येक महिनामा उक्त आगमगृहमा बसेर बीस स्थविर आजुहरुको समूहले अमाइपूजा गर्नुको साथै अरु बिशेष दिनहरुमा पनि दिशीपूजा, मोहनीपूजा, दिंलापूजा सम्पन्न गर्ने परम्परा पाइन्छ। श्रीसङ्कटाको विशेष पूजा र व्रत चतुर्दशीमा गर्ने प्रचलन छ,जुन तान्त्रिक बौद्ध विधि अनुसार मण्डलहरु बनाएर मन्त्रसाधन गरी गोप्य ढंगले पूजा गरिन्छ। यहाँको चक्रेश्वरले बिहानको प्रहरमा श्रीसङ्कटाको सम्मुख बसी कलवीरतन्त्र पाठ गरिन्छ भन्ने प्रत्येक दिन शान्ति-स्वतिका लागि सप्तबार पाठ गर्ने प्रचलन पनि पाइन्छ। यस देवगृहमा बौद्ध बाहेक हिन्दु आचार्य वा पण्डितहरु आएर पनि जप, पाठ गर्ने परम्परा देखिन्छ। यसरी एउटै देवतालाई बौद्ध तथा हिन्दु धर्मावलम्वीहरुले आ-आफ्नो तान्त्रिक पद्धति र सम्प्रदाय अनुसार पूजा उपासना गर्दछन् जसले नेपालीहरुको धार्मिक सहिष्णुता र सह-अस्तित्व को भावना समेत झल्किन्छ। यसबाट श्रीचण्डमहारोषण बौद्ध र हिन्दुका आस्था, विश्वास र श्रद्धागत एकताको प्रतीक देवताका रुपमा समेत देखिन्छन्।

## (ङ) श्रीचण्डमहारोषणको साधन र ध्यान:

बौद्ध ग्रन्थ साधनमालामा विभिन्न तान्त्रिक देवीदेवताहरुको पूजा उपासना विभिन्न साधन र ध्यानद्वारा पनि गरिने उल्लेख पाइन्छ। श्रीचण्डमहारोषण सम्बन्धी साधन र ध्यान थाहा पाउनका लागि श्रीचण्डमहारोषण तन्त्र, साधनमाला, आर्यगुह्यसमाजतन्त्रको अध्ययनबाट जान्न सकिन्छ। यस देवताको

नाममा चारवटा साधनहरु निर्माण भएका छन्। एउटा साधन जुन मुख्यतया कविताको रुपमा छन् त्यसको रचनाकार प्रभाकरकीर्ति हुन (Bhattacharyya:1993:60)। श्रीचण्डमहारोषण सम्बन्धी एउटा साधनमा यी देवतालाई साधकले निम्न अनुसारको स्वरुप सम्झीध्यान गर्ने बताएका छन् :

"श्री चण्डमहारोषणम् भगवन्तम् अतशीपष्पसंकाशम्
अचलापरनामानम् द्विभुजम् कीकराकषम् दमष्ट्राकरा
लमहाघोरवदनम् रत्नमौलिनम् दमष्ट्रानीपीदीताधरम्
मुण्डमालाशीरसकम् आरक्तचक्षुद्वयम् दक्षिणी
खड्गधरम् तर्जनीपाशह्रीदयस्थबाम्करम्
शीटसर्पयज्ञोपवितम् ब्याघ्राचरमनीबसनम्
नानारत्नबीरचिताभरणम् भूमिलग्नवामचरणम्
इषदुन्नतदक्षिणचरणम् सूर्य्यप्रभामालिनम्
आत्मानम्विचित्य ..... अक्षोभ्यमुकुटीनम् ध्यायत"

साधनमाला, A-91, Na-20-21, C-70

[अर्थ : साधकले समाधि र ध्यान गर्दा आफूलाई श्रीचण्डमहारोषणको रुपमा कल्पना गर्दछन् जसको वर्ण अतशीफूल जस्तो छ, जसलाई अचल भनेर पनि सम्बोधन गरिन्छ, जो एक मुख दुई हष्ट भएका छन्, जसको मुखाकृत्ति भयानक र विकराल देखिन्छ, जसले रत्न सुसज्जित शिरभूषण लगाइएका छन्, दाँतले आफ्नो ओठ टोकिएको छ, र मुकुटमा मुण्डमाला धारण गरेको छ जसका आँखा अलि राता छन्, जसले दाहिने हातमा खड्ग लिएको छ र छातीको अगाडि उठेका औंलामा पांश बेरेको छ, जुन पाश श्वेतवर्ण सर्पको रुपमा रहेको छ, जो बाघ छालामा बेरिएका छन्, जसको आभूषण विभिन्न रत्नादिले सुसज्जित छ, जसको बाँया खुट्टा भूमिमा टेकेको छ भने अर्को दाहिने खुट्टा अलि उठाइएको छ, जसमा सूर्यको जस्तो आभा छ। यसरी ध्यान गर्दा .......... उसले आफ्नो मुकुटमा अक्षोभ्यको प्रतिमा विद्यमान गरेको हुन्छ।]

यस ध्यानमा शक्तिको कुनै उल्लेख पाइदैन जोसंग देवता आलिङ्गबद्ध भएर यव-युम अवस्थामा रहेको हुन्छ। चण्डमहारोषणतन्त्रमा श्रीचण्डमहारोषणलाई धेरै महत्त्वपूर्ण देवताको रुपमा उल्लेख समेत गरिएको पाईन्छ।

खण्ड:तीन

# गुह्यतले दिगी देवालय

## क) इलांननीसित हिरण्यवर्णमहाविहारको सम्बन्ध :

ललितपुर, काठमाडौं उपत्यकाभित्रका नगरवस्तीहरूमा सबभन्दा प्राचीन नगरवस्तीको रूपमा रहेको देखिन्छ। यस नगर वस्तीका विभिन्न समयमा विभिन्न नाउँ रहेको तथ्यलाई पनि इतिहासले दर्शाउँछ। ती मध्ये यल, यूपग्राम, अशोकपत्तन, ललितपुर, ललितक्रमं, ललितापुरी र पाटन प्रमुख रहेका छन्। चिनीयाँहरूले ललितपुरलाई 'येहलन्' वा 'य-एर्हलं' र तिब्बतीहरूले 'येरान्' भनेर ललितपुरलाई 'कलात्मक नगर' (City of Fine Arts) को रूपमा सम्बोधन गरिन्छ भन्ने प्राचीनकालदेखिनै ललितपुर एउटा बौद्ध स्थलको रूपमा पनि प्रख्यात देखिन्छ। यहाँ विद्यमान चारदिशाका चार प्राचीन थूर र बीचको एउटा थूर, वाहा:वहिका कलात्मक भव्यता, अद्वितीय कलाकृति, महायानी, बज्रयानी धर्म-संस्कृतिका उत्कृष्टता र अविच्छिन्न धार्मिक र सामाजिक परम्परा आदिले यस क्षेत्रको महत्त्वलाई झन् उजागर पारेको छ।



चित्र नं. २

*हिरण्यवर्ण महाविहार, क्वाबाहा:*

ललितपुरको अठाऱ्ह प्रमुख विहारहरू मध्ये हिरण्यवर्ण महाविहार एउटा आफ्नै विशेषताले युक्त विहार शैली कलाको नमूना हो जुन विश्व प्रसिद्ध उच्च धातु-कलाकौशलको केन्द्र र पर्यटकहरूका बीच Golden Temple को नामले पनि ख्याति पाएको छ *(चित्र नं. २)*। स्थानीय जनभाषामा यो महाविहारलाई

"क्वावाहा:" भन्ने गरिन्छ । क्वालखु टोलमा निर्माण भएको यो महाविहार मङ्गलबजारको पाटन दरवार क्षेत्रबाट उत्तर-पश्चिम दिशामा पर्दछ । मध्यकालका राजा भाष्करदेवबाट संस्कार (पुनर्निर्माण) गरिएको यो महाविहार बौद्धहरूका साथ साथै हिन्दू धर्मावलम्बीहरूका लागि पनि एउटा पवित्र तीर्थस्थलको रूपमा प्रख्यात हुन पुगेको छ । ललितपुर क्षेत्रको यो हिरण्यवर्ण महाविहार एउटा अद्वितीय बौद्ध विहार हो जहाँ नियम विनियमलाई बडो सतर्कतापूर्वक अवलम्बन गरी यहाँको दैनिक, मासिक, वार्षिक तथा समय समयमा सम्पन्न गरिनु पर्ने पर्व, व्रत, पाठ, पूजा र अन्य संस्कारगत सामाजिक क्रियाकलापलाई सुचारु रूपले सम्पन्न गरिँदै आउँदा व्यवस्थित र प्रतिष्ठित विहारको रूपमा स्थापित देखिन्छ । यसरी विहारको नियमित दैनिक, मासिक र वार्षिक क्रियाकलापको साथै विहारका सर्वसंघ सदस्यहरूको धार्मिक र संस्कारगत सामाजिक क्रियाकलापलाई व्यवस्थित पनि क्वावाहाः संघद्वारा दुईवटा आगमगृहको व्यवस्था गरिएको पाइन्छ । जहाँ वज्रयानी परम्परा अनुसार तान्त्रिक देवता चक्रसम्बरको गुह्यपूजा सम्पन्न हुन्थ्यो ।

यी प्रमुख दुई आगमगृहहरूमा एउटा आगम क्वावाहाःको प्राङ्गणमा प्रवेश गर्ने बित्तिकै देब्रेतर्फको दोस्रो तल्लामा अवस्थित छ जसलाई "वतातले" भनिन्छ । यस वतातले आगममा क्वाबाहाः संघका दशपारमिता स्थविर आजुहरूद्वारा तिथि पर्वमा गुह्यपूजाहरू सु-सम्पन्न गरिन्थ्यो भने दशपारमिता स्थविर आजुहरूमा वरिष्ठताक्रमानुसार बज्राचार्याभिषेक भएका र अग्रज पद हासिल गरेका व्यक्ति मात्र चक्रेश्वर आजुको पदमा पुगेको हुन्छ र उक्त व्यक्ति मात्र यही वतातलेमा बाचुन्जेल निवास गरी यिनीद्वारा चक्रसम्बर लगायत कुमारी, गणेश आदि देवीदेवताको नित्यपूजा सम्पन्न हुने गर्दछ । हाल यहाँ चक्रेश्वर पदमा ९४ वर्षिय श्रीआशाकाजी वज्राचार्य आसिन हुनुहुन्छ (बि.सं. २०५९ श्रावण १ गते) ।

हिरण्यवर्ण महाविहारको दोस्रो आगम यसै विहारको ठीक पछाडिपट्टि पश्चिम दिशातर्फ इलांननीमा अवस्थित छन् जसलाई "गुह्यतले दिगि देवालय" भनिन्छ । यही देवालयको दोस्रो तल्लामा स्थानक मुद्राको चक्रसम्बर र बज्रबाराही लगायत श्रीस्वयम्भू चैत्य, सानो आकारको श्रीचण्डमहारोषणको प्रतिमा अरु विभिन्न देवीदेवताहरुको प्रतिमा र चित्रहरु प्रतिस्थापित छन् । यस गुह्यतले आगम गृहमा क्वावाहाः संघको दोस्रो समूहका बीस स्थविर आजुहरूद्वारा प्रत्येक औंसीका दिनमा अमाईपूजा साथै विभिन्न तिथिमा दिंलापूजा, दिशीपूजा, मोहनीपूजा र अरु गुह्य

पूजाहरू पनि सु-सम्पन्न गरिन्छ। हाल यस आगमगृहको बीस स्थविर आजुहरूमा चक्रेश्वरको पदमा ७७ वर्षीय श्रीन्हुच्छेवज्र वज्राचार्य हुनुहुन्छ (बि.सं. २०५९ श्रावण १ गते)। क्वावाहाः भित्र वतातले आगमगृहका दशपारमिता आजुमा कुनै कारणवस वा मृत्यु भएर दश जनाको संख्या नपुगेमा इलांननीको आगमगृहका आजुहरूबाटै जेष्ठताका क्रमले रिक्त संख्या पूर्ति गरिन्छ। यसरी क्वावाहाः संघको यी दुई आगमगृहहरू एक आपसमा अटूट र अविच्छिन्न सम्बन्ध रहेको हुन्छ। ललितपुर क्षेत्रमा यस किसिमको एउटै विहारमा दुईवटा आगमगृह भई तीस पारमितायुक्त स्थविर आजुहरू विद्यमान हुनु यस महाविहारको एउटा महत्त्वपूर्ण विशेषता हो भन्नुमा अत्युक्ति नहोला।

*ख) हिरण्यवर्ण महाविहारका दश र बीसस्थविर आजुहरूको नामावली:*

## हिरण्यवर्ण महाविहार सुधार समिति

## Hiranyabarna Mahabihar Sudhar Samittee

(स्था. : ने. सं. १०७५)

दशपारमिता आजूहरूको नामावली

| क्रम | आजुहरूको नाम | ठेगाना |
|---|---|---|
| १. | आशाकाजी वज्राचार्य चक्रेश्वर तथा थपाआजु | वतातले (चक्रेश्वर हुनुभन्दा पहिलेको ठेगाना-न्याढ) |
| २. | मीनबहादुर शाक्य | सरस्वतीननी |
| ३. | बुद्धरत्न शाक्य | नकबहिल |
| ४. | रत्नराज शाक्य | हः खा |
| ५. | मुनीराज वज्राचार्य | वनबहाः |
| ६. | तिर्थरत्न शाक्य | बागलदो |
| ७. | काजिरत्न वज्राचार्य | नकबहिल |
| ८. | ज्योतिमान शाक्य | हः खा |
| ९. | बज्रराज शाक्य | नकबहिल |
| १०. | रत्नराज बज्राचार्य | चुकबहाः |

(बि.सं. २०५९ श्रावण १ गते)

# हिरण्यवर्ण महाविहार सुधार समिति
# Hiranyabarna Mahabihar Sudhar Samittee

(स्था. : ने. सं. १०७५)

## बीस स्थविर आजूहरूको नामावली

| क्रम | आजुहरूको नाम | ठेगाना |
|---|---|---|
| १. | न्हुच्छेवज्र वज्राचार्य | दिगी देवालय (पहिलेको ठेगाना:क्वालखु) |
| २. | ज्ञानबज्र वज्राचार्य | नागवाहा: |
| ३. | आशारत्न वज्राचार्य | न्याखाचोक |
| ४. | लोकबहादुर शाक्य | कृष्णगल्ली |
| ५. | त्रैलोक्यराज वज्राचार्य | टंगल |
| ६. | धर्मरत्न शाक्य | नकबहिल |
| ७. | लोकरत्न शाक्य | चाकुपाट |
| ८. | कुलनरसिं शाक्य | नकवहिल |
| ९. | देवरत्न वज्राचार्य | बालिफल |
| १०. | राजभाई शाक्य | नागवाहा: |
| ११. | द्रव्यरत्न शाक्य | पुल्चोक |
| १२. | रत्नवज्र वज्राचार्य | न्याखाचोक |
| १३. | वीरबहादुर शाक्य | नागवाहा: |
| १४. | टंकमान शाक्य | बाग्लदो |
| १५. | तारणबहादुर शाक्य | नागवाहा: |
| १६. | जुजुरत्न शाक्य | अकिवाहा: |
| १७. | ज्ञानबहादुर शाक्य | नागवाहा: |
| १८. | बाबुकाजी शाक्य | नागवाहा: |
| १९. | मोतिरत्न बज्राचार्य | न्याखाचोक |
| २०. | हेरावज्र वज्राचार्य | न्याखाचोक |

(बि.सं. २०५९ श्रावण १ गते)

## ग) इलांननीको स्वरूपः

ललितपुरको इलांननी एउटा ठूलो आवासीय टोल हो जहाँ नेवार बौद्धहरू परापूर्वकालदेखि आफ्नो रीति-रिवाज, परम्परागत संस्कृति र मूल्य मान्यतालाई अवलम्बन गर्दै आ-आफ्नो सीपद्वारा जीवन यापन सुचारु रूपले निर्वाह गर्दै आइरहेको देखिन्छ। यस इलांननीमा क्वावाहाःका दुईवटा उप-कच्चा वाहाःहरू पनि अवस्थित छन् जहाँ आफ्नै किसिमले पूजा र अरु धार्मिक कार्यहरू सञ्चालन हुने गर्दछन्। ती उप-कच्चा वाहाःहरू हुन् - द्वारिका विहार (वैद्यबहाः) जुन हिरण्यवर्ण महाविहारको मूल मन्दिरको पछाडिकै भागमा



चित्र नं. ३

*द्वारिका विहार, बैद्य बाहाः*

जोडिएर बनाइएको मन्दिरमा मूलदेवता विद्यमान छन् *(चित्र नं.३)* भने अर्को चैत्यवर्ण विहार (मिच्छु वाहाः) इलाननीको दक्षिण दिशातर्फ अवस्थित छन्। *(चित्र नं.४)* यस इलांननीमा स्थापना भएका साना ठूला गरी जम्मा सातवटा चैत्य, दुईवटा धर्मधातु र पश्चिम दिशातर्फ फर्किएको सानो गणेशको मन्दिर छ। *(चित्र नं.५)* यस ठाउँको नाउँ कसरी 'इलांननी' हुन गयो भन्ने सम्बन्धमा यस



चैत्यवर्ण विहार - मिच्छुबाहाः



श्वेतवर्ण गणेश
सहित मन्दिर

दिगी आगम गृहका निवर्तमान चक्रेश्वर ज्यो. पं. रत्नराज वज्राचार्यको भनाइ अनुसार 'ईनाय' भनेको गणेशको नाम हो । त्यसैले 'ईनाय' अवस्थित ननी भएको हुनाले अप्रभंशको रूपमा 'इलांननी' रहन गएको हो । करिब दुई वर्ष अगाडि क्वावाहा:को जीर्णोद्धार कार्य हुँदा त्यहाँबाट प्राप्त दुई तीनवटा शिलालेखहरूमा इलाननीलाई 'इरानचोक' भनेर उल्लेख गरेको पनि पाइन्छ भने कसैकसैले यस ठाउँलाई 'इलहाननी' भनेर पनि सम्बोधन गरेको देखिन्छ ।

## घ) गुह्यतले दिगी देवालयको स्वरूप :

इलांननीस्थित यो गुह्यतले दिगी देवालय एक घर शैली मन्दिर वा बहीकला शैली स्वरुप निर्माण भएको देवालय हो । किनकि यो देवालय बहीकलाशैली अनुरुप अलि अग्लो एक तहका पेटीका माथि निर्मित छन् । राजा योगनरेन्द्र मल्लको समयको यस देवालयमा राखिएको सम्बत् ८७९ अंकित


चित्र नं. ६

*महाँकालको प्रस्तर प्रतिमा*




*गणेशको प्रस्तर प्रतिमा*

शिलालेख अनुसार यस देवालयलाई 'दिगीशपुर' पनि भनिन्छ। यो देवालयको देब्रेपट्टिको आधाभन्दा बढी भाग झिंगटीले छोपिएका छन् र दाहिनेपट्टि छाना नराखी त्यसैमा सानो मन्दिर उठाई दुई तहमा एक तह झिंगटी छ भने दोस्रो धातुको छाना माथि गजूर राखी देवालयलाई आकर्षक र कलात्मक अभिव्यक्ति प्रदान गरेको देखिन्छ। यस आगम गृहको मूलद्वार इलांननीतर्फ राखी दायाँ बायाँको भित्तामा सानो आकारको प्रस्तरको महाकाल *(चित्र नं.६)* र गणेशको मूर्ति *(चित्र नं.७)* र पुस्तकालयको बायाँपट्टि सानो गरुडको मूर्ति *(चित्र नं.८)* राखिएका छन्। साथै श्री सङ्कटाको देवकक्ष भित्र जाने ढोकाको देब्रेपट्टि प्रस्तरको फलकमा छेपू सहितको प्रभामण्डल राखि एउटा बज्र ठड्याइएको छ भने दायाँ बायाँ मञ्जुश्री र आर्यताराका प्रस्तरको मूर्तिहरु राखिएका छन् *(चित्र नं.११)*। देवालय भित्र र बाहिर पर्ने खुड्किलायुक्त सिंढीको दायाँ-बायाँ रक्षकको




*गरुडको प्रस्तर प्रतिमा*

रूपमा प्रस्तरकै एक जोडा सिंह राखिएका छन् र त्यसको तल भुईमा प्रस्तरकै पद्ममण्डप बनाएको छ। यस देवालयको अर्को द्वार नागबहाल तर्फ जान मिल्ने गरी राखिएका छन् जुन विभिन्न धार्मिक र सामाजिक पर्व- पाँच वर्षे इल्हने सम्यक् र अरु धार्मिक, सामाजिक कार्य सम्पन्न गर्ने बेलामा खोलिने गरिन्छ।

यस देवालयको भुईतल्ला वा पहिलो तल्लामा श्रीचण्डमहारोषणको ठूलो प्रतिमा स्थापित छ भने दोस्रो तल्लामा तान्त्रिक देवता श्रीचक्रम्बर बज्रबाराही, श्रीस्वयम्भू चैत्य, सानो आकारको श्रीचण्डमहारोषण आदिको प्रतिमा प्रतिस्थापन गरिएको पाइन्छ। सबभन्दा माथिल्लो तल्ला क्वावाहाः संघको विभिन्न धार्मिक र सामाजिक क्रियाकलापका लागि प्रयोग गरिन्छ।

यस गुह्यतले दिगी आगमगृहको अग्रभागको दोस्रो तल्लामा छानालाई अड्याउन लस्करै बाऱ्हवटा काष्ठकलाका टुँडालहरू ठड्याइएका छन्। वास्तवमा मन्दिर, विहार र देवालयका टुँडालहरू, छानालाई अड्याउनका लागि मात्र निर्माण गरेको नभई कलात्मक भावनाको प्रतीकको रूपमा र धार्मिक वा आध्यात्मिक भावनाको प्रष्फुटीकरणका निमित्त पनि निर्माण भएको देखिन्छ। कुनै पनि टुँडालहरूमा निर्मित मूर्तिहरू हेरेर देवालय भित्र कुन देवताको मूर्ति विद्यमान छन् भन्ने राम्ररी अड्कल गर्न सकिन्छ। यस देवालयमा ठड्याइएका बाऱ्हवटा काष्ठकलाका टुँडालहरू मध्ये बीचको दश टुँडालहरुमा दशक्रोध भैरवको मूर्ति र दायाँ-बायाँ सिंघिनी र व्याघ्रिणीका मूर्तिहरू विद्यमान छन्। यी दशक्रोध भैरवका मूर्तिहरू निम्नानुसारका छन् :

**दशक्रोध भैरव :**

| | |
|---|---|
| १) यमान्तक | २) प्रज्ञान्तक |
| ३) पद्मान्तक | ४) विघ्यान्तक |
| ५) अचल | ६) टक्किराज |
| ७) नीलदण्ड | ८) महाबल |
| ९) उष्णीषचक्रवर्ती | १०) सुम्भराज |

'धर्मसंग्रह'

उपर्युक्त दशक्रोध भैरवका साथै सिंघिनी र व्याघ्रिणीका मूर्तिहरू विद्यमान भएका टुँडालहरूको ठीक पछाडि सानो आकारका पाँच समूहका काष्ठ झ्याल (पञ्चझ्या:) बीचमा राखी त्यसको दाँयावाँया तीन समूहका काष्ठ झ्यालहरू दुईतिर राखिएका छन्। त्यसको ठीक माथिल्लो तल्लामा पनि बीचमा त्यसै पाँच समूहका काष्ठ झ्याल र दायाँ बायाँ साना साना झ्यालहरू राखेका छन्। सबभन्दा तल भुई तल्लामा मूलद्वार र श्री सङ्कटाको कक्ष भित्र जाने एउटा अर्को द्वारको बीच भागमा भित्र अँध्यारो नहोस् भन्नाका लागि सानसाना काठ जोडिएर बनाईएका जाली झ्याल जस्तै भित्ताहरू बनाएका छन्।

## ङ) गुह्यतले दिगी देवालयका अभिलेख :

गुह्यतले दिगी देवालयमा जम्मा दुईवटा प्रस्तरका अभिलेख र एउटा ताम्रपत्र राखिएका छन्। जसबाट उक्त देवालयको प्रतिस्थापन र जीर्णोद्धार सम्बन्धी

कुराहरू थाहापाउन सकिन्छ । यी तीनवटा अभिलेखहरू मध्ये सबभन्दा प्राचीन अभिलेख राजा योगनरेन्द्र मल्लको संबत् ८७९ अंकित शिलापत्र हो ।*(चित्र नं.१)*



चित्र नं. १

*राजा योगनरेन्द्र मल्लकालीन ने.सं. ८७९ अंकित शिलापत्र*

१) यो शिलालेख श्रीसङ्कटाको देवगृहको बाहिरी भित्तामा टाँसिएको छ र शिलापत्रमा उल्लिखित अभिलेखका मोटामोटी अर्थ निम्नस्थ छन् :

अर्थ :- ॐ नमः श्री चक्रसम्बराय पीशघंर महावीर ...
सम्बत् ८७९ चैत्र कृष्ण अष्ठस्यान्ति श्रीचक्रसंवर शक्ति सहसकेचो.....पूर बनाएर प्रतिष्ठा गरेको दिन भयो । श्री ३ योगनरद्रमल्लले राज्य गरिराखेको बेलामा। यी कार्य गर्ने दानपति श्रीजयरत्नजू, श्रीवीरजू, श्रीरत्नराजजू, श्री...जू, श्रीजयमूनिजू, श्रीशाकेमुनिजू, श्रीधरपतिजू, श्रीजालंधरायजू, श्रीचधसिजू, श्री देवजोतिजू, श्रीजयमणिजू, श्रीचुधराजजु, श्रीधनदेवजू, श्रीसतजू श्रीसतमूनिजू, श्रीरत्नचन्द्रजू, श्रीजनूराजजू, श्रीअमूर्तराजजू, श्रीवेषाजू श्रीरत्नमणिजू, श्रीभ्यावासिंजू श्रीधनपतिजू, श्रीदेसराजजू, श्रीरत्नदेवजू, श्रीधर्म्म श्रीधर्म्म श्रीजू । यी धर्म्म गोष्ठि समूहले दिगीशपुर बनाएर सुवर्ण गजूर चढाई, सुवर्णको तीनतह छत्र चढाएर (सुवर्णले) जज्ञ गरेर प्रतिष्ठा गरेको दिन भयो । मोहर ठंका १४० समूहले यो कार्यमा लगाएको भयो । यस घरको नजिकै इतिलङ (नागवहाल) को श्रीशाकेजूको भाय्र्या (श्रीमती) पूत्र श्री धर्म्ममूनिजूको, श्रीधर्म्मसिंकजू श्री बोधिजूले मोहर ठंका ७२... शुकि २ लगाएको भयो । यसबेला चक्रेश्वर श्रीजिरायराजु उपाध्याय ङाखाचुकका श्रीच... शीजू वज्राचार्य इतिलङहे श्री धनदेवजू ॥ यो दिनमा .... शुभम् ॥

२) यस गुह्यतले दिगी देवालयका शिलालेखहरुमा पुस्तकालय ढोकाको देब्रेपट्टि राखिएको शिलापत्र राजा श्री ५ त्रिभुवनको समयमा स्थापित शिलापत्र हो । *(चित्र नं.१०)*




श्री ५ त्रिभुवनकालीन ने.सं. १०७० अंकित शिलापत्र

यस शिलापत्रको अग्रपंक्तिहरु संस्कृत भाषामा लेखिएको छ भने पछिल्ला पंक्तिहरु नेपालभाषामा उल्लेख गरेको पाइन्छ जसको अर्थ निम्नानुसारका छन् :

अर्थ :- ॐ नम श्री वज्रसत्वाय् । सर्वप्रथम श्रीबुद्ध धर्म्म संघ त्रिरत्न श्रीशाक्यमुनि महाबुद्ध श्री सद्गुरु बज्रसत्वको आत्मा स्वरुप भएर बस्नु भएका श्रीपञ्चबुद्ध श्रीबुद्ध योगाम्बर गुह्यचक्रका नाथ देवदेवीगणहरू सबैलाई नमस्कार ॥ महाउत्तम बन्नु भएका नेपाल पुण्य भूमि ललितापुर शहरमा भास्करदेव भनेका राजाले बनाएको मानु स्वर्ग तुल्य भएर बसेका श्री हिरण्यवर्ण महाविहारमा विराज हुन भएका श्रीशाक्यराज महाबुद्धलाई नमस्कार ॥ यही विहारको इलांननि दिगी गुह्यतलेमा विराजमान हुनभएका श्री कुलिशेखर प्रमुखले विशंस्थवीर बस्नु हुने दिगी जिर्णोद्धार गर्न श्री .... याभराज र आभुषण विक्री गरेर आय आर्जन भएका १३०० तेऱ्हसय मोहरद्वारा यो गुह्यतले दिगी समेत जिर्णोद्धार गरेको भयो । यसमा नपुगेको श्री ... को सर्व संघादि प्रमुख सबै महानुभाव श्रद्धावान् दाताजनसंग चन्दा उठाएको भयो । श्री नेपाल सम्बत् १०७० बैशाख शुक्लको तृतीया महापर्व दिनमा श्री ५ महाराजाधिराज त्रिभुवन वीरविक्रम शाहदेवको समयमा वतातलेका श्रीचक्रेश्वर प्रमुखले दश स्थवीर, गुह्यतलेको श्रीचक्रेश्वर प्रमुखले बीस स्थवीर प्रमुखले सर्वसंघ सबै विश्वदेव व्राम्हण थकुरि राजा दैवज्ञ जोसि समेत श्री .... को चक्रपरिवार सबै समूह भएर यो गुह्यतले दिगी देवालय देव समेत जीर्णोद्धार गरेको भयो । दिगीको चक्रेश्वर ङाखाचुकका श्री कुलबहादुर, बेताजु अकिबाहाका बज्रबहादुर र उपाध्याय चुकवाहाका वज्रराज । यी प्रमुखहरुले थानका गुरु भराड .... । यी जीर्णोद्धार क्रिया गरेको भयो । शुभम् ॥

३) गुह्यतले दिगी देवालयको दोस्रो तलामा राखिएको ताम्रपत्र र त्यसमा

उल्लिखित मोटामोटी अर्थ निम्न छन् :

अर्थ : श्री चक्रसम्वराय नमः

शुभहोस, संवत् १०९९ साल फागुण मास शुक्लपक्ष द्वादस्यान्ति यो पूर्ण वसु नक्षत्रमा शनिश्वरवारको दिनमा श्रीको ठाउँमा जीर्णोद्वार गरेको दिन भयो विसपारमिता आजुहरु समोहन भयो ॥

चक्रेश्वर कुलवज्र वज्राचार्य (क्वालखु)

थकालि अष्ट राज शाक्य (थ्याका)

हर्षजोति शाक्य (बालिफल)

पूर्णमान शाक्य (न्याखाचोक)

बुद्धरत्न शाक्य (न्याखाचोक)

इन्द्ररत्न वज्राचार्य (बालिफल)

आशाकाजि वज्राचार्य (न्याखाचोक)

सूर्यमान शाक्य (नाय्लखु)

पूर्णबहादुर शाक्य (सांल्ह)

ज्ञानवज्र वज्राचार्य (झातापोल)

काजिरत्न वज्राचार्य (न्याखाचोक)

नौमिराज वज्राचार्य (न्याखाचोक)

माहावज्र बज्राचार्य (इलहाननी, चिभाचुक)

सुर्यमान शाक्य (भुल्खु)

सिद्धिराज शाक्य (अकिबाहा)

काजिमान शाक्य (न्याखाचोक)

हर्षराज शाक्य (न्हुबाहा)

जिर्तविर शाक्य (भुल्खु)

तेजराज शाक्य (हःखा)

किर्तिराज शाक्य (खाक्ष)

यी उपर्युक्त बीस जना आजुहरू संवत १०९९ सालमा गुह्यतले दिगी देवालय जीर्णोद्धार गर्दा समोहन भएका र बीसस्थवीर आजुको पदमा आसिन व्यक्तिहरु हुन्। जसको नाम र ठेगाना पनि यस ताम्रपत्रमा संलग्न गरी उल्लेख गरेको पाइन्छ।

## च) श्री चण्डमहारोषणको प्रतिमा निर्माण सम्बन्धी स्थानीय निवासीहरूको भनाई :

गुह्यतले दिगी देवालयमा स्थापित यी उपर्युक्त तीनवटा अभिलेखहरूमा यस गुह्यतले दिगी देवालयमा तान्त्रिक देवता श्रीचक्रसम्बर शक्ति सहितको मूर्ति प्रतिस्थापन गर्नुका साथै उक्त देवालयको जिर्णोद्धार भएको स्पष्ट तथ्य मात्र उल्लेख भएको पाइन्छ। तर यही देवालयमा स्थापित श्रीचण्डमहारोषण वा श्रीसङ्कटाको प्रतिमा स्थापना बारे स्पष्ट उल्लेख नपाएको देखिए तापनि ने.सं. १०७० मा यस देवालयको जिर्णोद्धार कार्य हुँदा यहाँबाट प्राप्त सानो आकारको श्रीचण्डमहारोषण (जुन अहिले श्री चक्रसम्बरको देवगृहमा स्थापित छन्) कै प्रतिमा अनुरुप ठूलो आकारको श्रीचण्डमहारोषणको प्रतिमा निर्माण गरी यही देवालयमा स्थापित गरेको कुरा यस इलांननी वरपरका निवासीहरुले बताएका छन्। यिनीहरूमा ७७ वर्षीय हर्षबहादुर शाक्य र ६५ वर्षीय रुद्रराज शाक्य हुन् जसका बुबाहरू यस मूर्तिको निर्माण कार्यमा संलग्न थिए। उनीहरुले आफूहरु १४, १५ वर्षको हुँदा श्रीसङ्कटाको प्रतिमा बनाई स्थापना गरेको देखेका कुराहरू स्मरण गर्दै बताएका छन्। यी दुबै व्यक्तिहरूको घर अगाडि नै श्रीसङ्कटाको प्रतिमा ढाल्ने र बनाउने आदि कार्यहरू भएको थियो। हर्षबहादुर शाक्यले आफूले देखेका र सुनेका कुराहरू स्मरण गर्दै भनेका छन् कि करिब ५२ वर्ष अगाडि गुह्यतले देवालयको जीर्णोद्धार कार्य संघका प्रमुख र सकल महानुभाव दाताहरूसंग चन्दा संकलन गरी सम्पन्न गरिएको थियो जुन कुरा ने.सं. १०७० अङ्कित शिलालेखमा पनि उल्लेख छ। यसको साथै उहाँले अरु के कुरा पनि व्यक्त गर्नुभएको थियो भने इतिलङ्हे वा नागबाहा निवासी श्रीआशारत्न धाख्वाका पिता श्रीआशाकाजी धाख्वा र तापाहिटी निवासी श्रीविहारीलाल

सुब्बाको संयुक्त प्रयासमा भद्रपुरमा खोलिएका D. B. Rice Mill बाट आय आर्जन गरी आम्दानी हुँदा धर्म कार्यका लागि भनी छुट्याएको भारतीय रकम रू. १,००,०००|- (एक लाख आइ.सी.) ले क्वावाहाको वतातले र गुम्बा जीर्णोद्धार गरिसके पछि बाँकी रहेको रकम पनि यस गुह्यतले दिगी देवालयको जीर्णोद्धार कार्यमा लगाएका थिए। तत्कालिन बेताजू अकिवाहाका बज्रबहादुर वज्राचार्यले हालको श्रीसङ्कटाको प्रतिमा बनाउनका लागि मैनको थासा: (साँचो) बनाएर ल्याएका थिए। त्यही थासा: अनुसार श्रीसङ्कटाको मूर्ति निर्माण भएको थियो। मूर्ति निर्माण गर्न श्रद्धानुहरूले आ-आफ्नो घरका भाँडा कुँडाहरू र स्वास्नीमानिसहरूले पनि आ-आफ्नो दाइजो स्वरूप प्राप्त भएका भाँडाकुँडाहरू प्रदान गरी निस्वार्थ रूपले ठूलो सहयोग गरेका कुरा स्मरण गर्दै हर्षबहादुर शाक्यले उपर्युक्त कुराहरु बताउनुभयो। अन्तमा सम्पूर्ण मूर्ति तयारी अवस्थामा आउँदा मूर्तिको तौल १८ धार्नी चानचुन भएको स्मरण गर्दै आफ्नो बिचार हर्षबहादुर शाक्यले व्यक्त गरेका थिए। यसरी ने.सं. १०७० मा गुह्यतले दिगी देवालयको जीर्णोद्धार र श्रीसङ्कटाको मूर्ति निर्माण हुँदा स्थानीय र वरपरका जनशक्तिले पनि ठूलो मद्दत दिएको कुरा त्यहाँ स्थापित शिलालेख र स्थानीय व्यक्तिहरूको अन्तरवार्ताबाट स्पष्ट थाहा हुन आउँछ।

### छ) *गुह्यतले दिगी देवालयको आर्थिक व्यवस्था र रीतिथिति :*

बौद्ध वाहा:बहीको धार्मिक एवं सांस्कृतिक क्रियाकलाप र पूजाहरू सूचारु रूपले सञ्चालन गर्नको लागि आर्थिक व्यवस्था र श्रोतको निकै ठूलो आवश्यकता रहन्छ। यसका लागि वाहा:संघका सदस्य र अरु श्रद्धालु दाताहरूले जग्गा-जमिन, नगद, वस्तु आदिको रुपमा वाहा:लाई आयस्ता स्वरूप आर्थिक सहायता प्रदान गरेको देखिन्छ। यसैबाट वाहा:को विभिन्न धार्मिक एवं सांस्कृतिक क्रियाकलाप र पूजाहरू सञ्चालन भई विहारको मौलिक संस्कृति र परम्पराको संरक्षण र सम्बर्द्धन हुनुको साथै यसलाई जीवन्तता प्रदान गरेको हुन्छ। विहारले पनि संघ सदस्यहरूलाई आफ्नो छत्रछायाँमा समेटी संरक्षत्व प्रदान गरेको हुन्छ। प्रत्येक बौद्ध नेवारहरू कुनै न कुनै वाहा:बहीसंग संलग्न भएरनै

हुर्केको र बढेको हुन्छ । वाहाःका आजुहरूको निगरानीमा प्रत्येक संघका सदस्यले *बन्देछुयेगु* (चुडाकर्म) सम्पन्न गरी आफ्नो इच्छा अनुसारआजुको तहमा पुगेपछि *नायःलुइगु, पञ्चथकालि जुइगु, थपाजु* र *चक्रेश्वर लुइगु, आचार्य लुइगु* आदि संस्कार गरी जेष्ठताको आधारमा विभिन्न सम्मान र पदद्वारा विभुषित हुन पुग्दछन् ।

ललितपुरका अरु वाहाः भन्दा क्वावाहाःको मूआगमगृह र दिगी आगमगृहका आजुहरूको नेतृत्वमा संघका दैनिक, मासिक र वार्षिक धार्मिक पूजाका साथै अरु विभिन्न रीतिथिति र गुठी सम्पन्न गर्ने परम्परा पाइन्छ । वाहाःमा प्रदान गरिएका आयस्ताबाट वाहाःका मूलदेवता र अरु देवी देवताका साथै आगमगृहका योगाम्बर, चक्रसम्बर, बज्रबाराहीको नित्य पञ्चोपचार (पुष्प, धुप, दीप, नैवेद्य र रस) पूजा, आरती अर्पण, स्तोत्रादि पाठ तथा आगमगृहकमा विभिन्न तिथिमा सम्पन्न गर्नु पर्ने *दशमी पूजा, चन्हे पूजा, अमाई पूजा, दत्त पूजा* र विभिन्न गुठीहरू पनि सम्पन्न गर्ने गर्दछन् ।

तर जग्गा-जमिनबाट आउने अन्नबालि अति न्यून भएको हुनाले यस्ता धार्मिक र सांस्कृतिक क्रियाकलाप र गुठी सञ्चालनमा धेरै असर परेको देखिन्छ । वि.सं. १८६२ को ६२ हरणका कारणले बौद्ध विहार वहालका आयस्ता श्रोतमा ठूलो आघात पर्न गयो । ललितपुरका अरु बाहाः भन्दा हिरण्यवर्ण महाविहारको आफ्नै किसिमले विशेषता र अद्वितीय कलाकृतिको अनुपम नमूनाको कारणले गर्दा पर्यटकहरूको आगमनले आर्थिक श्रोत अभिवृद्धि र वाहाःसंघका संख्या पनि अधिक भएको हुनाले विहारको धार्मिक कार्य र गुठीहरू अरु वाहाःको दाँजोमा अलि सुचारु रूपले सञ्चालन भएको देखिन्छ । यसको साथै ने.सं. १०७५ मा स्थापित हिरण्यवर्ण महाविहार सुधार समितिबाट वाहाःमा सञ्चालन गर्नुपर्ने विभिन्न धार्मिक एवं सांस्कृतिक क्रियाकलाप र गुठीका लागि र आजुहरूलाई व्यक्तिगत भत्ताको रूपमा आर्थिक व्यवस्था र श्रोतहरू उपलबध गराउने व्यवस्था पनि मिलाइएको छ ।

*ज) गुह्यतले दिगी देवालयका गुठी (पूजा) :*

दिगी आगमगृहमा गर्नुपर्ने नित्य पूजा बाहेक यहाँका वीसस्थविर आजुहरूको नेतृत्वमा विभिन्न तिथिमा विभिन्न पूजाहरू सम्पन्न हुने गर्दछन् । ती पूजाहरू निम्ननुसारका छन् :

| पूजाको नाम | | तिथि |
|---|---|---|
| १) अमाईपूजा (मासिक) | – | औंसी (अमावास्या) |
| २) दिशीपूजा (वार्षिक) | – | कृष्ण दशमी (मंसीर) |
| ३) मोहनीपूजा (वार्षिक) | – | महाष्टमी (आश्विन) |
| ४) दिंलापूजा (वार्षिक) | – | दिंला पुन्ही (श्रावण) |

उपर्युक्त पूजाहरू मध्ये प्रत्येक महिनामा औंसीको अमावास्या दिनमा गर्नुपर्ने अमाई पूजा बीस स्थविर आजुहरू मध्येबाट जेष्ठताको क्रमानुसार पालैपालो गरी पूजा एवं गण भोजन गराउने व्यवस्था गरिएको छ । अमाई पूजा बाहेक प्रत्येक वर्ष एक एक पटक तिथि तिथिमा गर्नु पर्ने दिशी पूजा, मोहनी पूजा, दिंला पूजा चाहिं बीस स्थविर आजुहरूमा सबभन्दा पछिल्लो स्थानमा रहेका चारजना आजुहरूले पूजा एवं गण भोजन गराउने व्यवस्था मिलाउनु पर्ने हुन्छ । क्वावाहाःको मूआगमगृह र दिगी आगमगृहमा सम्पन्न हुने यी विभिन्न पूजाहरू बाहेक नित्य पूजा, आजुहरूलाई दिइने मासिक भत्ता तथा आजुबाट पूजा सञ्चालन गर्न थप आर्थिक सहायता आदिको जानकारी हिरण्यवर्ण महाविहार सुधार समितिको सौजन्यबाट प्राप्त निम्नानुसार विवरणबाट स्पष्ट हुन आउँछ :

झ) श्रद्धेय दशपारमिता आजु र बीसस्थविर आजुहरुद्वारा विभिन्न पूजा सम्पन्न गर्न हिरण्यवर्ण महाविहार सुधार समितिबाट दिइने आर्थिक व्यवस्थाको विवरण

| क्र. सं. | आजुहरूको विविध पूजा | कमिटीबाट प्राप्त. | आजुहरूबाट थप | मासिक | वार्षिक |
|---|---|---|---|---|---|
| १. | पूर्णिमा पूजा | २,०००।०० | १,०००।०० | ३,०००।०० | ३६,०००।०० |
| २. | नित्यपूजा | ३००।०० | | ३००।०० | ३,६००।०० |
| ३. | अमाई पूजा | २,०००।०० | | २,०००।०० | २४,०००।०० |
| ४. | दशपारमिता दिशीपूजा | २,०००।०० | ५००।०० | | २,५००।०० |
| ५. | दशपारमिता मोहनीपूजा | २,०००।०० | ५००।०० | | २,५००।०० |
| ६. | दशपारमिता दिलापूजा | २,०००।०० | १,२००।०० | | ३,२००।०० |
| ७. | दशपारमिता आजुलाई मासिक भत्ता | २००।०० | | २०००।०० | २४,०००।०० |
| ८. | दशपारमिता बेताजुलाई | ५००।०० | | ५००।०० | ६,०००।०० |
| ९. | बीसस्थविर दिशीपूजा | २,५००।०० | | | २५,००।०० |
| १०. | बीसस्थविर मोहनीपूजा | २,५००।०० | | | २,५००।०० |
| ११. | बीसस्थविर दिंलापूजा | २,५००।०० | | | २,५००।०० |
| १२. | बीसस्थविर आजुलाई मासिक भत्ता | १००।०० | | २०००।०० | २४,०००।०० |
| १३. | बीसस्थविर बेताजुलाई | ३००।०० | | ३००।०० | ३,६००।०० |
| १४. | दोलंपूजा | ३,०००।०० | | | ३,०००।०० |
| १५. | स्वाँछापा | २,०००।०० | | | २,०००।०० |
| १६. | संघ भोजन | ३३,०००।०० | | | ३३,०००।०० |
| | जम्मा | ५६,९००।०० | | १०,१००।०० | १,७४,९००।०० |

*हिरण्यवर्ण महाविहार सुधार समिति, २०५९/०३/१५*

दिगी आगमगृहका जुनसुकै पूजा गर्दाखेरी श्रीसङ्कटालाई पनि तान्त्रिक विधि अनुसार पूजा गर्नु आवश्यक पर्दछ। जसले यस देवताको महत्त्वलाई राम्ररी दर्शाएको छ। यस देवालयको सबभन्दा माथिल्लो भाग भोजनको लागि व्यवस्था गरिएको हुनाले र इलांननी ठूलो ननी (चोक) भएको हुनाले पनि वरपरका धेरै जसो निवासीहरूले विभिन्न संस्कार, विवाह, उत्सव हुँदा आफन्तहरूलाई भोज ख्वाउनका लागि यी ठाउँहरु प्रयोगमा ल्याउने गर्दछन्। जसबाट यस देवालयका साथै कमिटीलाई पनि केही आर्थिक सहायता पुग्ने गर्दछ। अचेल त्यहाँ व्यवस्था गरिए अनुसार दिगी देवालयमा एकपटक वहालमा लिंदा क्वाबाहाः संघका सदस्यले रु. ७००।- र संघ वाहिरकाले रू. १२००।- तिर्नु पर्ने हुन्छ। यसरी गुठ्येतले दिगीशपुर देवालयको धार्मिक एवं सांस्कृतिक क्रियाकलाप र पूजाहरुको व्यवस्था मिलाएका देखिन्छ।

## खण्ड : चार

# निष्कर्ष

काठमाडौं उपत्यकाको प्रसिद्ध विहार ललितपुरस्थित हिरण्यवर्ण महाविहार का दोश्रो आगमगृहको रुपमा अवस्थित गृहशैलीको देवालयनै श्रीचक्रसम्बर बज्रवाराही तथा श्रीचण्डमहारोषणको मन्दिर हो । यसै देवालयको माथिल्लो तलामा श्रीचक्रसम्बर बज्रवाराहीको आगमकक्ष छ भने यसै देवालयको भुँइतलामा श्रीचण्डमहारोषणको मूर्ति अवस्थित छ । सो मूर्ति त्यस देवालयको दक्षिणपट्टि उत्तराभिमुख अवस्थामा स्थापना गरिएको छ ।

तान्त्रिक देवता श्रीचण्डमहारोषण बौद्ध तथा हिन्दूधर्मावलम्बी सबैका आराध्य देवता रुपमा देखिन्छन् । कतिपय भक्तहरुले उनलाई सङ्कटहर देवता (योगिनी सङ्कटा) को रुपमा पनि पूजा, प्रार्थना र उपासना गरेको पाइन्छ । जब मानिस आफ्नो शक्तिले नभ्याउने इच्छा र कामना बोकेर हिंड्न थाल्दछ तब उसले आफ्ना चाहनाको परिपूर्तिको लागि भगवान् श्रीचण्डमहारोषणको उपासना र दर्शनका लागि आफूलाई समर्पित गरेको देखिन्छ । मानिसलाई सांसारिक जीवनका अनेक पीडा, कष्ट र सङ्कटबाट मुक्ति दिने देवता श्रीचण्डमहारोषण बौद्ध र हिन्दू धर्मावलम्बीका बीच धार्मिक एकताका प्रतीक देवताको रुपमा समेत देखिन्छन् । यसको पुष्टि बौद्ध र हिन्दू दुबैले समान रुपमा उनको पूजा आजा र उपासना गरेकोबाट हुन्छ । यस प्रकारको महत्त्व रहेको श्रीचण्डमहार ोषणको विभिन्न पद्धति र विधि-विधानबाट पूजा र उपासना गर्ने प्रणाली समेत रहेको छ ।

यो देवालय गृहशैलीको साथै प्यागोडा शैलीको देवगृहको रुपमा देखिन्छ । मूर्ति स्थापना गरिएको भागमाथि गजुर र अन्य भागमाथि नेपाली झिंगटीको छाना भएको यो एउटा आकर्षक देवगृह र आगमगृहको रुपमा देखिन्छ । यो देवगृहको प्राचीन स्वरुप सम्वन्धी कुनै अभिलेख प्राप्त नभए तापनि यहाँबाट प्राप्त तीन अभिलेखहरु मध्ये- एकमा सम्बत् ८७९ मा राजा योगनरेन्द्र मल्लको समयमा यहाँ श्रीचक्रसम्बर शक्ति सहित बनाएर प्रतिष्ठा गरेको उल्लेख पाइन्छ भने

दोस्रो अभिलेखमा नेपाल सम्बत् १०७० बैशाख शुक्ल तृतियामा श्री ५महाराजधिराज त्रिभुवनको समयमा यो गुह्येतले दिगी देवालय जीर्णोद्धार भएको र तेस्रो ताम्रपत्रमा सम्बत् १०९९ साल फाल्गुणमा यसको पूनः जीर्णोद्धार गरेको कुरा उल्लेख भएको पाइन्छ। हिरण्यवर्ण महाविहारको प्राचीनता र यहाँ अवस्थित कतिपय अन्य कुराहरुको आधारमा यस देवगृहको स्थापना नेपालका इतिहासको प्राचीनकालतिरै भएको अनुमान गर्न सकिन्छ। यो देवालयको नित्य र पर्वपूजा श्रीचक्रसम्बरको गुठीबाटै सञ्चालित देखिन्छ। विशेष पूजा अर्थात प्रत्येक अमावास्थामा हुने अमाईपूजा (मासिक), दिशीपूजा (वार्षिक), मोहनीपूजा (वार्षिक), दिंलापूजा (वार्षिक) आदि पूजाहरु पनि सोही गुठीबाटै सञ्चालित भई यहाँ विराजित श्रीचक्रसम्बर र श्रीचण्डमहारोषणको पूजा गर्ने विशेष पद्धति पनि यहाँ रहेको देखिन्छ।

ललितपुरको एक ऐतिहासिक बस्ती र हिरण्यवर्ण महाविहारको बीस स्थविर आजुहरु बसेर विभिन्न पूजा सम्पन्न गर्ने आगमगृह (आगँछें) पनि भएको 'इलांननी' धार्मिक, सांस्कृतिक र सामाजिक दृष्टिले पनि अत्यन्त महत्त्व राख्दछ। एक त प्राचीनकाल देखिनै प्रसिद्धि प्राप्त हिरण्यवर्ण महाविहारसित इलांननीको अन्योन्याश्रित सम्बन्ध कायम छ भने दोस्रो यस टोलमा विराजित सबैको आराध्य देवता श्रीचण्डमहारोषण देवता प्रति मानिसहरुको अटल विश्वास र परम आस्था रहेको छ। यसैले यस इलांननी टोलको आफै साँस्कृतिक गरिमा रहेको कुरा त्यस क्षेत्रको अध्ययन गर्दा अवगत हुन्छ।

यस आगँछें वा गुह्येतले दिगी देवालयमा स्थापित श्रीचण्डमहारोषणको प्रतिमा निर्माणमा तत्कालिन सम्पूर्ण आजु तथा सर्वसाधारण पुरुष र महिलावर्गको सहभागिता भएको पनि पुष्टि हुन्छ जसबाट त्यसबेला मानिसहरुको आफ्नो धर्म र संस्कृति प्रति ठूलो आस्था र विश्वास कायम थियो भन्ने कुरा समेत स्पष्ट हुन आउँछ। यही परम्परालाई अंगाल्दै आजका बौद्ध नेवारहरुले पनि उक्त प्रतिमालाई जीर्णोद्धार गरी जीर्ण आभूषणहरुको सट्टामा नवीन आभूषणहरु समर्पण गरी प्राचीनकाल देखिनै चल्दै आएको धर्म संस्कृति र परम्परामा निरन्तरता प्रदान गरेको देखिन्छ।

यस गुह्यतले दिगी देवालयमा बसी बीस स्थविर आजुद्वारा अनिवार्य रुपले गर्नुपर्ने अमाईपूजा दिशीपूजा, दिंलापूजा, मोहनीपूजामा श्रीचक्रसम्बरको साथै श्रीचण्डमहारोषणलाई पनि तान्त्रिक विधि-विधानद्वारा सम्हय् ज्वलं र अरु सामग्रीले पूजा गर्ने प्रचलन महत्त्वपूर्ण मानिन्छ। उक्त पूजाहरु सम्पन्न गर्न हिरण्यवर्ण महाविहार सुधार समिटिबाट पनि केही सहयोग स्वरुप रकम उपलब्ध गराउने व्यवस्था भएको पाइन्छ। साथै आजुहरुबाट पनि केही रकम थप गरी पूजा सम्पन्न गर्ने व्यवस्था कायम रहेको देखिन्छ।

श्रीचण्डमहारोषणलाई नित्य रुपमा पूजा आजा गर्न आउँने त छँदै छ त्यसमा पनि विशेष गरी शनिवार, आदित्यवार, मंगलवार तथा आ-आफ्नो जन्म दिनमा बौद्ध तथा हिन्दूहरुले विभिन्न इच्छा, आकाङ्क्षाको पूर्ति तथा सङ्कटा दशा हरणका लागि पनि पूजा, जप तथा आराधना गर्न आउने प्राचीन परम्परा रहेको देखिन्छ। विशेषगरी जन्म दिनमा मानिसहरुले श्रीचण्डमहारोषण वा श्रीसङ्कटालाई यहाँका पूजारी (चक्रेश्वर) वा आफ्नो पूजारीद्वारा उक्त देवतालाई पूजा गराउने र जप, ध्यान समेत गराउने प्रचलन देखिन्छ। यी विभिन्न कुराहरुको आधारमा नेपाली समाजमा श्रीचण्डमहारोषणको ठूलो प्रतिष्ठा र अटल विश्वास भएको कुरा राम्ररी दर्शाउँछ।

यसरी समष्टिगत रुपमा अवलोकन गर्दा बौद्ध तथा हिन्दूहरुको आराध्यदेवता श्रीचण्डमहारोषण तथा श्रीसङ्कटाद्यो विराजमान भएको गुह्यतले दिगी देवालय र इलांननी बस्ती नेपालको गौरवपूर्ण ऐतिहासिक, धार्मिक र सांस्कृतिक महत्त्वको छ भन्नुमा कुनै अत्युक्ति नहोला। तर यस्ता मौलिक धार्मिक र सांस्कृतिक सम्पदाले परिपूर्ण देवालय र बस्ती तथा गृहस्थवर्गमा अत्यन्त लोकप्रिय आराध्य देवता श्रीचण्डमहारोषण वा श्रीसङ्कटाको प्रतिमा नियमित रुपले संरक्षण र सम्बर्धन गर्नु राष्ट्र तथा स्थानिय सम्पूर्ण नेपालीहरुको पहिलो कर्तव्य हुन आउँछ। ललितपुर, हिरण्यवर्ण महाविहारको एक विशिष्ठ गरिमाको रुपमा अवस्थित सो देवालयको ऐतिहासिक तथा धार्मिक महत्व र विशेषतालाई सुरक्षित राख्नु आजका बौद्ध तथा हिन्दूधर्मावलम्बी सबैको परम कर्तव्य र दायित्व देखिन्छ।

◆◆◆

## परिशिष्ट-१

# देवालय जाने ढोकाको दाहिने पट्टिको शिलालेख

लिपि:प्रचलित नेपाल लिपि　　　　　　　　　　नापः १५.२५ इ. लम्बाई
८ ई. चौडाई

१ ॐ नमः श्री चक्रसंवराय पीशधंर महावीर स्वमिचाणि
रू विणा कूलिणंशं जग् ग्राप्ती सग .... बरनम् ॥ संबत् ८७९
चैत्य कृष्ण अष्ठम्यान्ति थौ चक्रसंवर शक्ति सहसकेचो .. पूर दयका
प्रतिष्ठा दिन जुरो ॥ श्री ३ योग नरेन्द्र मल्लस्य विजयराज्ये ॥ थ्व तेयादा
नपति श्री जय रल्लजु श्री वीरजू श्री रत्नराजजू श्री ..जू श्री जयमू
निजू श्री शाकेमूनिजू श्री धरपतिजू श्री जालंधरायजू श्री चधंसिजू श्री
देवजोतिजू श्री जयमणिजू श्री चुधराजजु श्री धनदेवजु श्री
सतजू श्री सतमूनिजू श्री रत्नचन्द्रजू श्री जनूराजजू श्री अमूर्तराज
जु श्री बेषाजु श्री रत्नमणिजु श्री भ्यावासिंजु श्री धनपतिजु श्री दे
सराजजु श्री रत्न देवजु श्री धर्म्म श्री जु थूति धर्म्म गोष्ठि समोहो
न दिगी शपुर दय्कं सुवर्ण गजुरी छास्यं सूवर्ण स्वात मार
सूवर्णया स्वत छत्र छास्यं सूवर्ण न जज्ञ याङ प्रटिष्ठा सं..
..दिन जुरो ॥ सहक समाहोर ठंका १४० समोह याङामा
..थ्व या छे थाय् इतिलङहेया निवा श्री शाके मूनिजुभार्य्या
..रो ह राज पूत्र श्री धर्म्म मूनिजु या श्री धर्म्मसिंजू श्री वोधिजु
थुति जुरो ॥ थूति स श्री शाके मूनिजु मोहोर ठका ७२..
शुकि २ थुति उपर तुक जुरो ॥ थ्व वीरस चक्रश्वर बज्राचार्य
श्री जिराय राजु..पाध्या ङाखाचुक श्री च.. शीजू बज्रा....
चा इतिलङहे श्री धन देवजु ॥ थ्व दिन कून्हू..व..नद..
....पहा......याङा......तपुजा याङा दिनजुरो ॥
जुस्यं....स्तस..कासाध्ल्य..मार शुभम् ॥

## परिशिष्ट-२

## पुस्तकालय ढोकाको देव्रेपट्टिको शिलालेख

लिपि: देवनागरी नाप: १८ इ. लम्बाई
१०.२५ चौडाई

ॐ नम श्री बज्र सत्वाय ॥ ॥ आदौ त्रिरत्न मुनि शाक्यसिंह श्री बज्रसत्वात्मक पञ्चबुद्ध श्री बुद्ध योगाम्बर चक्र नाय श्री गुह्यदेवानसगण नमकहे। ॥ श्री मन्महनपूण्य त्तमे सुभुभौ श्री नेमपाले ललिपुराख्ये ॥ तत्पट्टने भास्करदैव बर्मास निर्मित स्वर्गपुरि बशोभ ॥ हैरण्य वर्ण भिघसु प्रकास विहार मासीत्सुगतालयञ्च् ॥ तस्मिन् बिहारेसु बिराजमान श्री शाक्यराज नमेहं ॥ ॥ गुह्ये ता लाख्ये विजहार बुद्धं श्री स्वंष्ट देवान् कुलिशेशवराद्यान् ॥ विश स्थवीरा दिक मालयंत ज्जीर्णा म्ति म इजञ्च समुद्धरार्थ ॥ नेपाल सम्बत न भस प्रब्योमचन्द्रे तिमासे सित माधवेति ॥ सन्मील्प संघादिक सवंगोत्रं जीर्ण ञ्चशीर्ण म्प्र समुद्धरत्ति ॥ ॥ अथ नेपाल भाषा ॥ आदौ न्हापां श्री बुद्ध धर्म्म संघ त्रीरत्न श्री शाक्यमुनि महाबुद्ध श्री सङ्गुरू बज्र सत्वया आत्मा स्वरूप जुया बिज्याकपिं श्रीपञ्चबुद्ध श्रीबुद्धयोगाम्बर गुह्यचक्रया नाथ देवदेवीगणपिं सकस्यातनं नमस्कार महाउत्तमजुया च्वंगु नेपाल पुरापभूमि ललितापूर शहरे भास्कर देव धयाम्हजु .....दयेका वंगु मानु स्वर्ग बतुल्प जुया च्वंगु श्री हिरण्य बर्ण महाविहारे बिराज जुया बिज्याम्ह श्री शाक्य राज महा बुद्ध यात नमस्कार ॥ ॥ थ्व हे बिहारया इलांननि दिगी जीर्णेद्वार यायत् श्री ...... यास वंस घादि प्रमुख सकल महानुभाव श्रद्धा वान् दाता जन पिंके चन्डा उठेयानागु जुल ॥ ॥ श्री नेपाल संम्वत १०७० बैशाख श्रुक्लया तृतिया महापवै दिनस श्री ५ महारजाधिराज त्रिभुवन वीर वि क्रम साहदेवया पर्यायस बताततलेय श्री चक्रेश्वर प्रमुख दसस्थवीर गुह्य तलेया श्री चक्रेशवरप्रमुख बीस स्थवीर थ्वते प्रमुख सर्व संग दक्व वि देव बाह्मण थकूरि जुजोसि धंगु स्मेत श्री.. या चक्र परिवार दक्व सकल समूहजुया व थ्व गुह्यतले दिगी देवालय देव स्मेत जिर्णेद्वार याना जुल ॥ दिगीया चक्रेश्वर डाखाचुकया श्री कुल बाहादुर वेताजु अकिबाहाया बज्रबाहादूर उपाध्याचुक बाहाया बज्रराज ॥ थ्वते प्रमुखनं थान या गुरूभाराडया नथानया चित्ता कचोना व थ्वते जीर्णोद्वार क्रिया याना जुल ॥ श्रुभम् ॥

## परिशिष्ट–३

## देवालयको दोस्रो तल्लामा चक्रेश्वरको देब्रेपट्टि राखिएको ताम्रपत्र

लिपिः देवनागरी

नापः१० इ. लम्बाई
८ इ. चौडाई

श्री

श्री चक्रसम्बराय नमः

श्रुयऽस्तु सम्बत् १०९९ साल फाल्गुण मासे शुक्लपक्ष द्वाद
स्यान्ति थौ पूर्ण वसु नक्षत्रे हति गन्ध योगे शनिश्च्वरबार खुन्हु श्रीया
थास जिर्णद्धार याना दिन जुल सुभम् ॥ बिसपारमिता आजु
पिनि समोहन जुल ॥

चक्रश्च्वरी निकुम्ह कुल वज्र वज्राचार्य (क्वालखु)
थकालि अष्ट राजशाक्य (थ्याका)
हर्षजोति शाक्य (बालिफल)
पूर्णमान शाक्य न्याखाचोक
बुद्धरत्न शाक्य न्याखाचोक
इन्द्ररत्न वज्राचार्य बालिफल
आशाकाजी वज्राचार्य न्याखाचोक
सूर्यमान शाक्य नाय्लखु
पुर्णबहादुर शाक्य सांल्ह
ज्ञान बज्र वज्राचार्य झातापोल
काजिरत्न वज्राचार्य न्याखाचोक
नौमिराज वज्राचार्य न्याखाचोक
माहाबज्र वज्राचार्य इलहानिनि चिभाचुक
सूर्यमान शाक्य भुल्खु
सिद्धिराज शाक्य अकिबाहा
काजिमान शाक्य न्याखाचोक
हर्खराज शाक्य न्हूबाहा
जितबिर शाक्य भुल्खु
तेजराज शाक्य हखा
किर्तिराज शाक्य खाक्ष

## परिशिष्ट-४

# नागवाहाःका श्री पद्मरत्न धाख्वाज्यूले श्रीचण्डमहारोषण देवतालाई समर्पण गरेको नवीन मुकुट पछाडिको भागमा अङ्कीत अभिलेख

॥ श्रीचण्डमहारोषणाय नमः ॥

॥ ॐ आः हूँ चण्डमहारोषणाय हूँ फट् स्वाहाः ॥

ॐ श्रयोस्तु । ने.सं. ११२२ गुँलाथ्व पारु (२०५९ श्रावण शुक्ल २४ गते) शुक्रवार खुन्हु यल, नागवाहाःया स्व. आशाकाजी धाख्वा व सन्त कुमारीया छ्य् श्री आशाकाजी धाख्वा व स्व. चन्द्र देवी धाख्वाया जेष्ठ सुपुत्र श्री पद्मरत्न धाख्वा व भार्या सानुनानीया धर्मचित्त उत्पन्न जुया यल हिरण्यवर्ण महाविहार या इलांननीस्थित दिगी आगमगृहय विराजित श्रीचण्डमहारोषणया मुकुट स्यंगुलिं वसपोलयात (९) गुँगू ओहया किकिपा (ओह तोला ४०) सहित चन्द्रकलायुक्त लुँसिया सिजःया रत्नमुकुट दोहलपा याःगु जुल । थुगु धर्मकार्य यानागु पुण्यया प्रतापं सकल प्राणीया सङ्कटदशाहरण व सम्पूर्ण नेपाःमि पिनिगु दुःखमोचन जुईमा धका थुगु प्रणिधान याःगु जुल । थुगु पुण्य कार्यस् ग्वहाली ब्यूपिं जहानपिं राजेन्द्र, प्रसन्न, प्रसेन, रोहन, केशरी, नम्रता व रुची जुल ।

## परिशिष्ट - ५

# शनिश्चरवारस्य

ॐ नमः भगवत्यै आर्य्यग्रहमातृकायैः ॥

एवंमया श्रूतमे कस्मिन्समये भगवान्न डकवत्यां महानगर्य्यां अनेक देव, नाग, यक्ष, गन्धर्वा सुरगरुड, किन्नर महोरगादित्य सोमाङ्गारादि बुद्ध, बृहस्पति, शुक्र, शनिश्चरादि राहु, केतु, भिरष्टाबिंशति नक्षत्रादि भिः स्तूयमानो, महावज्र समयालङ्करा व्यूहाधिष्ठानाधिष्ठिते-सिंहासने विहरतिस्मः ॥ अनेकै बोधिसत्व शत सहश्रैः सार्द्ध ॥ तद्यथा ॥ बज्रपाणि नाच नाम बोधिसत्वेन महासत्वेन बज्रमतिनाचनाम बोधिसत्वेन महा सत्वेनः ॥ बज्रचण्डेणाच नाम बोधिसत्वेन महासत्वेन ॥ बज्रवेगेनच नाम बोधिसत्वेन महासत्वेनः । बज्र सेनेनच नाम बोधिसत्वेन महासत्वेन ॥ बज्र बिनायकेनच नाम बोधिसत्वेन महासत्वेन ॥ बज्रचाप हस्तेनचनाम बोधिसत्वेन महासत्वेन बज्रबिकूर्बितेनचनाम बोधिसत्वेन महासत्वेनः ॥ बज्राधिपतेनाचनाम बोधिसत्वेन महासत्वेन ॥ बज्रा लंकारेणचनाम बोधिसत्वेन महासत्वेनः बज्र विक्रमेंनचनाम बोधिसत्वेन महासत्वेनः ॥ ज्योतिबज्रेनच नाम बोधिसत्वेन महासत्वेन ॥ अबलोकितेश्वरेणचनाम बोधिसत्वेन महासत्वेन ॥ लोकश्रीयाणचनाम बोधिसत्वेन महासत्वेन ॥ विकसित बकूत्रेणचनाम बोधिसत्वेन महासत्वेनः ॥ पद्मनेत्रेंणचनाम बोधिसत्वेन महासत्वेनः ॥ मञ्जुश्रीयाणचनाम बोधिसत्वेन महासत्वेनः ॥ मैत्रीयेणचनाम बोधिसत्वेन महासत्वेनः ॥

एवं प्रमुखैर्महा बोधिसत्व शत सहस्रैः साध्र्दपरिवृतः पुरस्कृतो भगवान् धर्म न्देशयतित स्मः ॥ आदौ कल्याणं मध्ये कल्याणंपर्य्य वसान कल्याणं स्वर्थं सुब्यञ्जणं केवलं परिपूर्णं परिशुद्धं पर्य्यवदातं ब्रम्हचर्य्य संप्रकाशय तिस्मः ॥ अथखलु भगवान चिन्तामणिमहा ब्यूहा लंकारं नाम धर्म पर्य्यायं देशय तिस्म ॥ अथखलु बज्रपाणि बोधिसत्वो महासत्व स्तत्पर्ष मण्डल मव लोक्य सनादुत्ठाय स्वऋध्य धिष्ठा नेन भगबन्त मनेक शतसहस्रं प्रद क्षिणी कृत्य प्रणाम्य पूरतो निषद्य सगर्भेण पर्य्यङ्क मातुह्य लीलया तत्पर्षत्मवलोक्य बज्राञ्जलीं स्वहृदये प्रतिष्ठाप्य भगवन्त मेतदवोत्ततः ॥ ग्रहाश्व भगवन् नुग्राउग्र रूपाश्चरौद्रा रौद्र रूपाश्चक्रूराक्रूर रूपाश्च सत्वाश्च बिहेथयन्ति । केषाञ्चित्प्राणमपि

हरन्तिकेषांचिदुपद्रवांश्च कूर्वन्ति। केषाँचिद्दीर्घायूष्काबां सत्बानांमल्पायूषःकूर्वन्ति। केषांचडोजोहाश्चकूर्वन्ति। एवंसर्वसत्वानुपद्रवेणबाहयन्तिः। तद्देशयतु भगवन धर्म पर्य्यायंः येन सर्वसत्वाः सर्वो पद्रबेभ्योरक्षा भविष्यन्तिः॥ भगवानाहः॥ साधू साधू बज्रपाणे यस्त्वं सर्वसत्वा नामर्थाय हिताय सुखाय कृपाचित मूत्तपाद्य। महागुह्याति गुह्यतरंतथागतं सम्यक् सम्बुद्धं परि पृछसि तच्छृणु साधुसुतुष्ठू मनसिकुरू भाषिष्येहं। ग्रहाणां मुग्ररूपाणांकूराति भीषणमुखानां महा गुह्याति गुह्यतरं दिब्य पूजाञ्च जाप्यञ्च यथानुक्रम वर्ण भेदेन सर्वेषां यथा तुष्यन्ति तेग्रहाः पूजिता प्रतिपूज्येन्तेनीर्दहन्ते चमानिताः। देंबाअप्य सूराश्चैव किन्नराश्चमहोरगा। यक्षाश्च राक्षसाश्चबा मानुषाश्चैव मानुषाः॥ शमयन्ति चक्रूद्धाश्व महानु ग्रह तेजसः। तेषांपूजां प्रबक्षामि मन्त्राश्चापियथाक्रमंः अथखलु भगबाञ्छाक्यमुनिः सम्यक् संबुद्धः स्व हृदयात् करूणा बिक्रीडितंनाम रस्मिं जालंनिश्चार्य्य ग्रहाणां मूर्ध्नि प्रवेशयतिस्म। अथतत्क्षणा देवसर्ब ग्रहा आदित्यादयोत्थाय भगवन्तं शाक्यमुनिं तथागतं सम्यक्संबुद्धं दिव्य पूजाभिः पूजयित्वा प्रणम्य कृताञ्जलि पुटोभूत्वा भगवन्त मेत दवोचत्॥ अनुगृहितावयं भगवता सम्यक्संबुद्धेन, तद्देशयतुनु भगवन्तादृसं धर्म्मपर्य्यायं येन वयं सामग्री भूतास्तस्य धर्मभाणकस्य रक्षां कूर्य्यामः॥ गुप्तिं परित्राणं परिग्रहं परिपारणं शान्ति स्वस्त्ययणं दण्डपरि हारणं शस्त्र परिहारं बिषदूषणं विषनाशनं सीमा बन्धञ्च धरणी वन्धञ्चः कूर्य्यामः अथ शाक्यमुनिस्तथागतोर्ह सम्यक् संबुद्धः ग्रहाणा मन्त्र पूजाश्च भाषतिस्म ॐ मेघोत्काराय स्वाहा॥ ॐ शीतांसवें स्वाहा॥ ॐ रक्तांङ्ग कुमाराय स्वाहा॥ ॐ बुद्धाय स्वाहा॥ ॐ भोगास्पदयाय स्वाहा॥ ॐ असूरोत्तमाय स्वाहा॥ ॐ कृष्ण वर्णाय स्वाहा॥ ॐ अमृतप्रियाय स्वाहा॥ ॐ ज्योतिःकेतवे स्वाहा॥ इमाणिबज्रपाणे नवग्रहाणां मन्त्र हृदया पथितसिद्धानि॥ यथानुक्रम वर्णभेदेंन दिशाञ्च गन्ध मण्डल कंपद्ममध्ये चतुरश्रं चतुद्वारं चतुस्तो-रणशोभितं। कूटागारं चक्र समन्वित कर्तव्यं। तन्मध्ये शित कमलोपरि कूम्कूमगन्ध मण्डलकं द्वादशांङगुर प्रमाणं चिन्तयेंद्भास्करं रक्तवर्ण सहश्र सूर्य्य समतेजो मालिनं। तापस रूपधरं भुजाभ्यां सितकमलधरं सिन्दूरवर्ण समतेजो मालिन बिग्रहः॥ अस्यदेयं क्षीर भोजनं कून्दूर- धूपं। ॐ मेघोत्कार ाय आदित्याय् ज्योतिस्केतबे स्वाहाः॥ ॥ पूर्वस्यांदिशि रक्त कमलो

परिप्रियङगुगन्ध मण्डलके सोमो ब्राम्ह इतिज्ञेयः। शितबर्णा जटांमकुटधरो भुजद्वयो अक्षसूत्र कमण्डलूधरं कुमून्द पुष्पावसक्त अस्य भोजनं घृतोदनं। श्रीवास धूप। ॐ चन्द्रामृत बिक्रमाय शीतांशवे स्वाहाः॥ दक्षिणस्यां दिशि शुक्ल कमलोपरि चन्दन गन्ध मण्डलके भिक्षू मंगलश्चोक्त रक्तबर्णो रत्नमकुटी शक्तिधरःबरद हस्त। भोजन मत्स्यमांस भक्त गुडोदनंवा। गुगुरुधूप। ॐ रक्ताङ गर सो ज्वल कुमाराय स्वाहा॥ पश्चिमायां दिशि रक्तपद्मोपरि कृष्णागुरु गन्ध मण्डलके ब्रम्हचारी वुधःस्या पीतवर्णः रक्तस्मश्रु अक्ष सूत्र कमण्डलू धर। भोजन मत्स्यपूङ्ग माषकृसरं। धूपो गन्धरस। ॐ श्री राजपुत्र सूपीत वर्णाय बुधाय स्वाहाः॥ ॥ उत्तर स्यां दिशिसित कमलोपरि देवदारु गन्ध मण्डलके गुरुः परिब्राजक गुरुःतप्तकाञ्चन वर्ण॥ रक्तस्मश्रु अक्षसूत्र कमण्डलूधरं। अस्यदेयं दधिभक्तोदन क्षीरम्वा। मधुघृन धूप। ॐ लोहितवर्ण निर्गमाय वृहस्पति भोगास्पदाय स्वाहाः॥ ॥ अग्नेयाँ दिशिरक्त पद्मोपरिचन्दन गन्ध मण्डलके शुक्रः पाण्डपतधारिं गोक्षीरवर्ण धबलाभो जटामकूटाक्ष सूत्र कमण्डलूधरः। अस्यदेयंक्षीर भोजनं कर्पूरधूपः॥ ॥ ॐ नमः शुक्लाधिपतये सुरोत्तमांय शुरहे स्वाहा नैऋत्यांदिशिसित पंकजोपरि नील चन्दन गन्धमण्डलके शनिश्चरः कृष्णवर्णः क्षपनको ज्ञेय फणीमृतपीत जटामकुट रक्तश्मश्रुः अक्षसूत्र क्षीक्षीरि-काधरं। भोजनं मत्स्यमांस भक्तकृसरेः। धूपोगन्ध रस। ॐ शनिश्चराय कृष्णवर्णाय कृष्णभूक्ता स्वाहाः॥

## परिशिष्ट-६

# राहोः

बायुव्यांरक्तां भोजो परितगर पारि गन्ध मण्डलकंः कापालिको राहूः ॥
राजाबर्तवर्ण निभरर्द्धदेह रविरथ भयानक लोचनयुगो द्रष्ट्राकल्लाल भृकुटीकृत ललात पञ्च वर्ण मेद्य मध्यतल भुजाभ्यां चन्द्र सूर्य्य कवलाभि नयस्थितः । अस्य देयंमाषामिष भोजन। तिलकृषरो बा विवर्णधूपः । ॐ नमः विकृत बक्ताय रुधिरासिने राहोभृगाञ्जन सन्निभाय अमृतप्रियाय स्वाहा ॥ ॥

ऐशान्यां दिशिरक्तसरोरुहो परी पृक्का गन्ध मण्डलके चाण्डाल केतु र्भवेत्। धूम्रबर्णः कृताञ्जलिनागा कृति स्वपुच्छभृत्। अस्य भोजनं घृतपुरकं सर्ज्जरस धूपः ।

## परिशिष्ट-७

# अथ संकटास्तोत्रम्

नारद उवाच। जैगीषव्य मुनिश्रेष्ठ सर्वज्ञ सुखदायक। आख्यातानि सुपुण्यानि श्रुतानि त्वत्प्रसादतः ॥१॥ न तृप्तिमधिगच्छामि तवा वागमृतेन च। वदस्वैकं महाभाग संकटाख्यानमुत्तमम् ॥२॥ इति तस्य वचः श्रुत्वा जैगीषव्योऽब्रवीत् ततः। संकष्टनाशन्न स्तोत्रंश्रृणु देवर्षिसत्तम ॥ ३॥ द्वापरेतुपुरा वृत्ते भ्रष्टराज्यो युधिष्ठिरः। भ्रातुभिः सहितो राज्यनिर्वेदं परमं गतः ॥४॥ तदानीं तु ततः काशीं पुरीं यातो महामुनिः। मार्कण्डेय इति ख्याता सह शिक्ष्यैर्महायशा ॥५॥ तं दृष्ट्वा तु समुत्थाय प्रणिपत्य सुपूजितः। किमर्थम्लानवदन एतत् त्वं मां निवेदय ॥६॥ युधिष्ठिर उवाच। सकटं मे महत् प्राप्तमेतादृग्वदनं ततः। एतन्निवारणोपायं किञ्चिद् व्रूहि मुने मम ॥ ७॥ मार्कण्डेय उवाच। आनन्दकानने देवी संकटानाम विश्रुता। वीरेश्वरोत्तरे भागे पूर्वे चन्द्रेश्वरस्य च ॥८॥ श्रृणु नामाष्टकं तस्याः सर्वसिद्धिकरं नृणम्। संकटा प्रथमं नाम द्वितीयं विजया तथा ॥९॥ तुतीयं कामना प्रोक्त चतुर्थ दुःखहारिणी। शर्वाणी पञ्चमं नाम षष्ठं कात्यायनी तथा ॥१०॥ सप्तमं भीमनयना सर्वरोगहराऽष्टमम्। नामाष्टकमिदं पुण्यं त्रिसन्ध्यं श्रद्धयान्वितः॥११॥ यः पठेत् पाठयेद् वाऽपि नरो मुचयेत संकटात् इत्युक्त्वा तु नर श्रेष्ठ मृषिर्वाराणरीं ययौ ॥१२॥ इति तस्य वचः श्रुंत्वा नारदो हर्षनिर्भरः। ततः संपूज्य तां देवी वीरेश्वर समन्विताम् ॥१३॥ भुजैस्तु दशभिर्युक्तां लोचनत्रयभुषिताम्। मालाकमण्डलुयुतां पद्मशङ्खगदायुताम् ॥ १४॥ त्रिशूलडमरुधरां खड्गर्मविभूषिताम्। वर दाभय हस्तां तां प्रणम्य विधिनन्दन ॥१५॥ वारत्रयं गुहोत्वा तु ततो विष्णुपुर ययौं। एतत्स्तोत्रंस्य पठन पुत्रपौत्रविवर्धनम् ॥१६॥ संकष्टनाशनं चैव त्रिषु लोकेपु विश्रुतम्। गोपनीयं प्रयत्नेन महावन्ध्याप्रसूतिकृत् ॥१७॥ इति श्रीपद्मपुराणे संकटाष्टकं समपूर्णम्।

## परिशिष्ट-८

**अष्टभैरव**

१) असिताङ्ग भैरव
२) रूरू भैरव
३) चण्ड भैरव
४) क्रोध भैरव
५) उन्मत भैरव
६) कपाली भैरव
७) भीषण भैरव
८) संहार भैरव

(महामण्डल पूजाविधि)

**अष्टयोगिनी**

१) गौरी
२) चौरी
३) वेताली
४) धष्मरी
५) पुष्करी
६) शवरी
७) चण्डाली
८) डोम्बिनी

(साधनमाला)

**नवग्रहदेवता**

१) सूर्य
२) चन्द्र
३) मंगल
४) बुध
५) वृहस्पति
६) शुक्र
७) शनि
८) राहु
९) केतु

(ग्रहमातृका पूजाविधि)

**अष्टकुलयोगिनी**

१) चण्डाली
२) चर्मकारी
३) मातङ्गी
४) मत्स्यकारिणी
५) मदद्यगर्भी
६) रजकी
७) क्षीरकी
८) धनवल्लभा

(साधनमाला)

## परिशिष्ट ८

### महापण्डित राहुल साकृत्यायनले प्रस्तुत गरेको ८४ सिद्धहरुको सूची:

| | क्रम नाम | जाति | जन्मेका देश | समकालिक राजा |
|---|---|---|---|---|
| १) | लुइपा(द) | कायस्थ | मगध | राजा धर्मपाल (७६९-८०९) |
| २) | लीलापा(द) | | | सरहपा (६) देखि तेस्रो पिंढी |
| ३) | विरूवा | | | देवपाल (८०९-४९) |
| ४) | डोम्बिपा(द) | क्षत्रिय | मगध | लुइपा (१) का शिष्य |
| ५) | शवरपा(द) | क्षत्रिय | | विक्रमशिला (सरह ६)का शिष्य |
| ६) | सरहपा(द) | ब्राह्मण | नालन्दा | राजा धर्मपाल(७६९-८०९) |
| ७) | कंकालिपा | | मगध | |
| ८) | मीनपा | माझी | कामरूप | जालन्धरका शिष्य, मत्स्येन्द्रका पित, गोरक्षका गुरू |
| ९) | गोरक्षपा(द) | | | देवपाल(८०८-४९) |
| १०) | चौरङ्गीपा | राजकुमार | मगध | गोरक्षका गुरुभाइ |
| ११) | वीणपा | राजकुमार | गौडा | कण्हपा १९ का शिष्य,भद्रपाका पनि |
| १२) | शान्तिपाद | ब्राह्मण | मगध | महीपाल(९७५-१०२६) विक्रमशिलाका आचार्य (रत्नाकर शान्ति ) पूरा नाउँ |
| १३) | तन्तिपा | तंतवा | सोंधीनगर | जालन्धरका शिष्य |
| १४) | चमरिपा | सार्की | विष्णुनगरपूर्व देश | |
| १५) | खड्गपा | शूद्र | मगध | चर्पटि ५४का चेला |
| १६) | नागर्जुन | ब्राह्मण | काञ्ची | सरहपाका चेला |
| १७) | कण्हपा | कायस्थ | सोमपुरी | राजा देवपाल(८०९-४९ई) |
| १८) | कर्णरिपा (आर्यदेव) | नालन्दा | | नागार्जुनका चेला |
| १९) | धगनपा | शूद्र | पूर्वी भारत | शान्तिपा (१२) का शिष्य |
| २०) | नारोपा | ब्राह्मण | मगध | महीपाल (९७५-१०२६) |
| २१) | शलिपा (शिलपाद) | सूद्र | विधसुर | |
| २२) | तिलोपा(तिल्लोपा) | ब्राह्मण | भीगुनगर | नारोपा (२०) का शिष्य |
| २३) | छत्रपा शूद्र | संधोनगर | | सरहपा (६) का शिष्य |
| २४) | भद्रपाद | ब्राह्मण | मणिधर | ऐ.का शिष्य |
| २५) | दोसंधि (द्वि खण्डीपा) | गंधपुर | | |
| २६) | अजोगिपा गृहपति(वैश्य) | शालिपुत्र | | ऐ.का शिष्य |

| | | | | |
|---|---|---|---|---|
| २७) | कालपा | | राजपुर | अवधूतिपाका तेस्रा पुस्ता |
| २८) | धोम्बीपा | धोबी | शालिपुत्र | दशौं शदी |
| २९) | कंकणपा | राजकुमार | विष्णुनगर | |
| ३०) | कवरिया(कंक्लपा) | राजकुमार | उडिसा | घण्टापा (५२) |
| ३१) | डेंगीपा | ब्राह्मण | उडिसा | शालिपुत्र लुइपा(१)का चेला |
| ३२) | भदेपा | | श्रावस्ती | कण्हपाका शिष्य |
| ३३) | तंति(तंतेपा) | शूद्र | कौशाम्वी | |
| ३४) | कुकुरिपा | ब्राह्मण | कपिलबस्तु | मीनपा(८) का गुरू |
| ३५) | कुचि(कुशलिपा) | शुद्र | ऋरि | |
| ३६) | धर्मपा | ब्राह्मण | बिक्रमशिला | कण्डपा र जालन्धरका चेला |
| ३७) | महीपा(महीवात) | शूद्र | | मगध कण्हपा(१७) का चेला |
| ३८) | अचिन्तिपा | लकडी वेच्ने | धनीरूप | |
| ३९) | भष्लह (भेलपा) | क्षत्रिय | कञ्जूर | |
| ४०) | नलिनपा | | शालीपुर | |
| ४१) | भुसुकुपा | राजकुमार | नालन्दा | देवापाल (८०९-४९) |
| ४२) | इन्द्रभूति | राजा | श्रीलङ्का | अनङ्गबज्र (८१) कंबलपा ३० का शिष्य |
| ४३) | मेकोपा | वधिक | भङ्गलपुर(भागलपुर) | |
| ४४) | कुण्ठाली(कुमारीपा) | रांमेश्वर | शान्तिपाका(१२) | शिष्य |
| ४५) | कर्मार (क्म्वारिपा) | लोहार | शालिपुर | अवधूतिका चेला |
| ४६) | जालन्धरिपा | ब्राह्मण | नगरलो | कण्हपा (१७) मत्स्येन्द्रपाद कागुरू |
| ४७) | राहुलपा | शूद्र | कामरूप | सरहका तेस्रो पिढी |
| ४८) | धर्वरि(धर्मरिपाद) | | वोधिनगर | विरूपा (३)को चौथो पिंढी |
| ४९) | मेदिनीपा | | लाखयुथ | लीलापा(२)को चौथो पुस्ता |
| ५०) | पकंजपा | ब्राह्मण | | नागार्जुन (१६)का शिष्य |
| ५१) | बज्र (धण्टा)पा | क्षत्रिय | वारेन्द्र | देवपाल (८०९-४९) |
| ५२) | जेगीपा | डोम | उडन्तपुरी | शवरपा(५) का चेला |
| ५३) | पंकजपा | ब्राह्मण | | नागार्जुन (१६) का शिष्य |
| ५४) | चेलुकपा | शूद्र | भङ्गलपुर | अबधूतिमैत्रीपाका शिष्य |
| ५५) | गुणरिपा | चिडीमार | डिसुनगर | लीलापा २ का शिष्य |
| ५६) | लुचिकपा | ब्राह्मण | भंगलदेशक | |
| ५७) | निर्गुणपा | शूद्र | पूर्व देश | |
| ५८) | जयानन्त | ब्राह्मण | भंगलपुर | |

| | | | | |
|---|---|---|---|---|
| ५९) | चर्परिपा | कहांर | चम्पा | मीनपाका गुरू |
| ६०) | चम्पकपा | राजकुमार | | |
| ६१) | भीष्वनपा | शूद्र | शालिपुत्र | |
| ६२) | भलिपा | तेली | सनतपुरी | |
| ६३) | कुँवरिपा | | श्रीदेश | |
| ६४) | चवरि, जवरि(अज पालिपा) | | | कण्हपाका तेस्रो पुस्ता |
| ६५) | मणिभद्र (योगिनी) | गृहदासी | मगध | कुकुरिपाकी चेली |
| ६६) | मेखलापा (योगिनी) | वैश्य | अगवेनगर | कण्हपा(१७)की चेली |
| ६७) | कनखलपा | | देवीकोट | ऐ की चेली |
| ६८) | कलकलापा | शुद्र | भोरलीनगर | |
| ६९) | कनधालिपा | दर्जी | मणिधर(मेहर) | कण्हपाका चेला |
| ७०) | धगुलिपा (उधारिया) | शुद्र | धेरक देश | |
| ७१) | उधलिपा | वैश्य | देवीकोट | कर्णरिपा(१८) का चेला |
| ७२) | कपाल पार (कमलापा) | शूद्र | राजपुरी | |
| ७३) | विलपा | राजकुमार | प्रहर (सहर?) | |
| ७४) | सागरपा | राजा | काञ्ची | |
| ७५) | सर्यभक्षपा | शूद्र | महर | शविरिपा (२)का चेला, भुसुक (४१)का पनि चेला |
| ७६) | नागवोधि पा | ब्राह्मण | पश्चिम भारत | नागार्जुन (१६)का चेला |
| ७७) | दारिकपा | राजा | उडिसा | लुइपा(१)का चेला |
| ७८) | पुतुलिपा | शूद्र | भंगलदेश | |
| ७९) | पनह(उपानह) पा | चमार | संघीनगर | |
| ८०) | कोकालिपा | राजकुमार | चम्पारन | |
| ८१) | अनङ्गपा | शूद्र | गौड (विहार) | (पूर्वी डोम्बिपा (४) का शिष्य |
| ८२) | लक्ष्मीकरा(योगिनी) | राजकुमार | सम्भलनगर | राजा इन्द्रभूतिकी बहिनी |
| ८३) | समुन्द्रपा | | सवडी(गोरखपुर) | |
| ८४) | भलि(धालि) पा | ब्राह्मण | अपत्रदेश | |

पुरातत्व निवन्धावली पृ १४६-१५४

परिशिष्ट-१०

## अन्तर्वाता लिएका विशिष्ट व्यक्तिहरुको सूचीः

| | नाम | बर्ष | ठेगाना |
|---|---|---|---|
| १. | चक्रेश्वर आजु श्री न्हुच्छेबज्र वज्राचार्य | ७७ | गुह्यतले दिगी देवालय) |
| २. | आजु ज्यो. श्री रत्नराज वज्राचार्य | ७८ | चुकवाहाः |
| ३. | आजु श्री आशारत्न वज्राचार्य | ७५ | न्याखाचुक |
| ४. | आजु श्री द्रव्यरत्न शाक्य | ६९ | पुल्चोक |
| ५. | आजु श्री ज्ञान बहादुर शाक्य | ६५ | नागवाहाः |
| ६. | श्री आशारत्न धाख्वा | ७७ | नागवाहाः |
| ७. | श्री विक्रमराज वज्राचार्य | ५८ | चुकवाहाः |
| ८. | श्री हर्ष बहादुर शाक्य | ७७ | इलांननी |
| ९. | श्री रुद्रराज शाक्य | ६५ | इलांननी |
| १०. | श्री गौतम वज्राचार्य | ५२ | क्वालखु |
| ११. | श्री प्रज्ञादेवी वज्राचार्य | ५५ | क्वालखु |

# सन्दर्भ ग्रन्थ - सूची

नेवारी, नेपाली र English

१. *कलवीर तन्त्र*

२. *गुणकारण्डव्यूह*

३. *साधनमाला*

४. *पञ्चरक्षासूत्र*

५. *धर्मसंग्रह*

६. *ग्रहमातृका -पूजाविधि*

७. *ग्रह-योगिनी स्तोत्र*

८. *चौराशी सिद्धोंका वृतान्त*

९. *सप्तवार ग्रहमातृका पुस्तकम्*

१०. कोइराला, कुलचन्द्र (बि.सं. २०५२), *श्रीमत्स्येन्द्रनाथ*, काठमाडौं, डिल्लीवजारः गुठी संस्थान

११. बज्राचार्य, जुद्धरत्न (बि.सं. २०५८), *श्रीसङ्कटा राजकीर्ति महाविहार (टेवहाल) को संक्षिप्त परिचय*, काठमाडौ, टेवाहाः सुनकेशरी बज्राचार्य

१२. अनु. बज्राचार्य, पं दिव्यवज्र (बि.सं. २०५८), *आर्य श्रीगुह्यसमाजतन्त्रम्*, ललितपुर दौबाहाः लोटस रिसर्च सेन्टर

१३. सम्पा, बज्राचार्य, धर्मराज (ने.सं.११०७), *सप्तवार ग्रहमातृका पुस्तकम्*, ल.पु गावाहाल, प्यगथाँः धर्मराज बज्राचार्य ।

१४. संक. र सम्पा. बज्राचार्य, पं.बद्रीरत्न(ने.सं. ११२२), *श्री नेपाः देया च्वखँ-स्वखँ मुना (भाग १)*, यँ, लगंबाहाः प्रदीपमुनि, चक्रमुनि बज्राचार्य ।

१५. राहुल सांकृत्यायन, (ई.सं. १९५८), *पुरातत्व निवन्धावली*, इलाहवाद, सहोर भागलपुर जिल्ला ।

१६. शाक्य, पं. हेमराज, (ई.सं. १९४९), *महायानी बौद्धदेवता नामसूची* ललितपुर, पुल्चोक : धर्मबहादुर धाख्वा ।

१७. बलदेव जुजु, श्रेष्ठ. सुरेन्द्र (ने.सं. ११२०), *नेपाः या तान्त्रिक द्यः व तान्त्रिक पूजा*, च्वमिपिं ।

१८. शर्मा, गोपालराज (बि.सं. २०५७), *ग्रह-योगिनी स्तोत्र*, ललितपुरः धुम्ती रुद्रि टोली ।

१९. Bhattacharyya, Benoytosh (A.D. 1993), *The Indian Buddhist Iconography*, New Delhi: Asian Educational Services.

